# वराहक्षेत्रको मकरसंक्रान्ति मेला

– सोमप्रसाद खतिवडा

## संक्रान्तिको परिचय

एक वर्षमा जम्मा बाऱ्हवटा राशिहरू हुन्छन् ।[१] पृथ्वीले सुर्यको परिक्रमा गर्दा प्रत्येक वर्षमा प्रत्येक महिनाको एक गते सूर्य अलग अलग राशिमा सर्ने गर्दछन् । जुन दिन सुर्य एक राशिबाट अर्को राशिमा सर्दछन्, त्यस दिनलाई संक्रान्ति भनिन्छ र प्रत्येक संक्रान्तिलाई राशि अनुरूपको नाम दिइन्छ ।[२] यसै क्रममा माघ एक गते सूर्य धनु राशिबाट मकर राशिमा सर्ने मान्यता छ, जुन मान्यता अनुरूप माघे संक्रान्तिलाई मकर संक्रान्ति भनिन्छ । वास्तवमा संक्रान्तिको अर्थ सूर्य एक राशिबाट अर्को राशिमा सर्नु भन्ने हुन्छ[३] र सूर्य मकर राशिमा सर्ने, मकर रेखामा पर्ने तथा उत्तरायण शुरू हुने दिनलाई मकर संक्रान्तिको नामले चिनिन्छ ।[४]

हिन्दूहरूका लागि संक्रान्तिहरू पवित्र दिन एवं पर्वको रूपमा रहने गर्दछन् र उक्त अवसरमा स्नान, व्रत, दान, उपवास आदि जस्ता कृत्यहरू सम्पन्न गरेर उक्त पर्वहरू मनाउनु पर्ने, जसबाट पूण्य प्राप्त गर्न सकिने विधान हिन्दू पुराणहरूले दिएका छन् । मत्स्यपुराणले उक्त दिनहरूमा गर्नुपर्ने व्रतको बारेमा विस्तृत विवरण दिएको छ, जुन विवरण अनुसार संक्रान्तिको अघिल्लो दिन मध्यान्हमा एक पटक मात्र भोजन गर्नु पर्दछ । साथै संक्रान्तिको दिन तीलयुक्त जलले स्नान गरी गृहस्थ ब्राह्मणलाई भोजन सामग्रीयुक्त एउटा पात्र र एउटा गाई दक्षिणा गर्नु पर्दछ ।[५] ब्राह्मणलाई संक्रान्तिको दिन आभूषण र दुईवटा स्वर्णपत्र दान गर्ने र गरिब एवं त्यस्तो दानगर्न नसक्नेले पनि फलहरू खानदिनुपर्ने विधान दिइएको छ । उक्त दिन तेल विहिन खाना खाने र दान गर्ने तथा गंगा स्नान गर्नुपर्ने साथै त्यसबाट महापुण्य प्राप्त हुनसक्ने बताइएको पाइन्छ ।[६] संक्रान्तिको दिन चिसो पानीले नुहाउनु पर्ने उल्लेख गर्दै त्यसो नगर्ने व्यक्ति सात जन्मसम्म निर्धन र

---

१. *मेष, वृष, मिथुन, कर्कट, सिंह, कन्या, तुला, वृश्चिक, धनु, मकर, कुम्भ र मीन वर्षभरका बाऱ्हवटा राशिहरू हुन् ।*
२. *वैशाखदेखि चैत्रसम्म क्रमिकरूपमा सूर्य प्रत्येक महिना माथिका राशिहरूमा सर्दै जाने गर्दछ ।*
३. *पांडुरंग वामन काणे, धर्मशास्त्रका इतिहास, चौथो भाग, तृतीय सं., (अनु, अर्जुन चौवे कश्यप), (लखनउः उत्तर प्रदेश हिन्दी संस्थान, ई. १९९६), पृ. ७९*
४. *राणा प्रसाद शर्मा, पौराणिक कोश, (वाराणशीः ज्ञानमण्डल लिमिटेड, १९८६) पृ. ३८९*
५. *काणे, पूर्ववत नं. ३, पृ. ७९*
६. *काणे पूर्ववत नं. २ पृ. ८०*

रोगी बन्ने बताइएको छ । साथै उक्त दिन स्नान गर्ने र देवतालाई हवन गरी पितृलाई जल चढाउने व्यक्ति सूर्यद्वारा भविष्यको जन्ममा फर्काई दिने उल्लेख विभिन्न पौराणिक ग्रन्थहरूले गरेका छन् ।

विभिन्न राशिहरूमा सूर्य मात्र नभएर अन्य ग्रहहरू पनि सर्ने गर्दछन् । ग्रहहरू र सूर्य एक राशिबाट अर्को राशिमा छोटो समयमा सर्दछन् । ज्योतिष गणनाबाट सूर्य र ग्रहहरूको विभिन्न राशिमा सर्ने समय पत्ता लगाई त्यस्तो अवसरमा पूण्य कार्य गर्दा ज्यादा फलप्राप्त हुने मान्यता राखिन्छ । ग्रहहरू एक राशिबाट अर्को राशिमा सरेको तीस तीस घडि यता र उताको समयलाई पूण्यकार्य गर्न उचित समय मानिन्छ । साथै ग्रहहरूको विभिन्न राशिहरूमा सर्ने कार्य गणना गरी मिलाएर सत्कार्य गर्न कठिन हुने हुनाले आज भोलि सूर्यको सराईलाई मात्र ख्याल गर्ने चलन बढेर गएको छ ।

बाव्हवटा संक्रान्ति सात दिन या वारको आधारमा सात प्रकारका मानिन्छन् । आइतवारदेखि शनिवारसम्म पर्ने ती संक्रान्तिहरूलाई क्रमश: घोरा, ध्वांशी, महोदरी, मन्दाकिनी, मन्दा, मिश्रिता र राक्षशी भनिन्छ ।[७] धर्मशास्त्रहरूमा पूण्यकर्मगर्न कुन वारको कुन संक्रान्ति उपयुक्त हुन्छ भन्ने विधान पनि दिइएको पाइन्छ , जस अनुसार बाह्मणका लागि मन्दा, क्षत्रीयका लागि मन्दाकिनी, वैश्यका लागि ध्वांशी, शुद्रका लागि घोरा, चोरका लागि महोदरी, मद्य बिक्रेताका लागि राक्षशी र चाण्डाल एवं डरलाग्दो शिल्पिका लागि मिश्रिता संक्रान्ति उपयुक्त मानिन्छन् ।[८]

विभिन्न संक्रान्तिहरूमा के कस्ता वस्तुहरू दान दक्षिणा गर्नु पर्दछ भन्ने विधान समेत धर्मशास्त्रहरूले नै दिएका छन्, जस अनुसार

१. मेष संक्रान्तिमा भेडा
२. वृष संक्रान्तिमा गाई
३. मिथुन संक्रान्तिमा वस्त्र, भोजन र पेय पदार्थ
४. कर्कट संक्रान्तिमा घिऊ
५. सिंह संक्रान्तिमा सुन र वाहन
६. कन्या संक्रान्तिमा वस्त्र, गाई, अन्न र बिऊहरू
७. तुला र वृश्चिक संक्रान्तिमा वस्त्र र घर
८. धनु संक्रान्तिमा वस्त्र र वाहन
९. मकर संक्रान्तिमा इन्धन र अग्नि
१०. कुम्भ संक्रान्तिमा गाई, घाँस र जल एवं
११. मीन संक्रान्तिमा नयाँ फूल दान गर्नु उपयुक्त हुने गर्दछ ।[९]

## मकर संक्रान्ति:

वर्षभरका बाव्हवटा संक्रान्तिहरू मध्ये मकर संक्रान्ति निक्कै महत्त्वपूर्ण मानिन्छ । प्राचीनकालदेखि आजसम्म पर्वको रूपमा मनाईदै आएको एक मात्र संक्रान्ति पनि यहि हो । यसलाई किन मकर संक्रान्ति भनिएको हो भन्ने विवरण प्रसंगवश माथि नै दिइएको छ । यहाँ उक्त अवसरमा गर्नुपर्ने पुराणहरूले दिएको धार्मिक कृत्यहरू तथा त्यसबाट प्राप्त हुने पूण्यको बारेमा चर्चा गर्ने प्रयास गरिएको छ ।

मकर संक्रान्तिको अवसरमा एकदेखि तीन दिनसम्म उपवास बस्नुपर्ने विधान दिइएको पाइन्छ । यस अवसरमा तीन दिनसम्मको उपवास पछि स्नानगरी सूर्यको पूजा गर्ने व्यक्तिका इच्छाहरू पूरा हुने बताइन्छ ।[१०] आजकल मकर संक्रान्ति धार्मिक भन्दा सामाजिक कृत्यसंग ज्यादा नजिक छ र उपवास भन्दा पनि स्नानलाई महत्त्व दिइन्छ । उक्त अवसरमा गंगाको साथै अन्य धार्मिकरूपले महत्त्वपूर्ण नदीहरूमा नुहाउने कार्यलाई महत्त्व दिने चलन छ । संक्रान्तिको दिनको दानलाई पूण्यदायक मान्दै उक्त दिन गाई र तील दान गर्नुपर्ने विधान दिइएको पाइन्छ ।[११]

---

७. *वृहत्संहिता, ९८, ६-११*
८. *हेमाद्रिकालखण्ड, पृ. ४०९, ४१०*
९. *कल्पकृत्य नैयत, पृ. ३६६...३६७, उदृत, काणे, पृ. ८२*
१०. *काणे, उही, पृ. ८२*
११. *डा. राजवली पाण्डे, हिन्दू धर्मकोश (दोस्रो सं.), (लखनऊ: उत्तर प्रदेश हिन्दी संस्थान, १९८८), पृ. ४८४*

मकरसंक्रान्ति पर्व सूर्य उत्तरायण हुनलाग्दाको सम्झनामा मनाइन्छ । सूर्य दक्षिणायण हुँदा उत्तरी गोलार्द्धमा जीऊ कठ्याङ्ग्रिने जाडो हुने तथा उत्तरायणका साथसाथै भारतवर्षमा न्यानोपनको शुरूवात हुने भएकाले त्यसैको स्मरण स्वरूप यो पर्व मनाउने गरिएको हो । पुरानो ज्योतिष अनुरूप यो पर्व माघ एक गते मनाइने गरिएको छ । आज आएर माघ एक गते नै उत्तरायण शुरू हुन्छ भन्ने निश्चित नियम छैन, तर पनि यो पर्वले निरन्तरता चाहिँ पाउँदै आएको छ । विभिन्न धर्मग्रन्थहरूले मकर संक्रान्तिका दिन स्नान र श्राद्ध गर्नु पर्दछ भन्ने विधान दिएका छन्, तापनि आज भोलि चाहिँ श्राद्धको बदला स्नानलाई महत्त्व दिने गरिएको छ ।

मकर संक्रान्तिलाई आज आएर एउटा सामान्य पर्वको रूपमा मात्र नलिएर देवीको स्वरूपको पर्व एवं उत्सव मान्ने गरिन्छ, उनलाई संक्रान्ति देवीको रूपमा लिँदै उनको वाहन हात्ति मान्ने चलन चलेको पाइन्छ । संक्रान्ति देवीले कालो, सेतो र रातो रंगको लुगा लगाउने, हातमा धनुष र शूल लिने, लाहा र गोरोचनको तिलक लगाउने, युवा वालक, वयस्क र प्रौढ तीनै स्वरूपकी, उभिएकी र वसेकी हुने स्वरूपमा यिनलाई चर्चा गरिन्छ । यी देवीका नौवटा हातहरू र एउटा लामो नाक रहेको उल्लेख पाइन्छ । संक्रान्तिदेवी गएको दिशाका मानिसहरू दु:खी हुने, आएको दिशाका सुखी हुने तथा उनले जसलाई देख्दछिन्, त्यो चाहिँ नष्ट हुन्छ भनिएको छ ।[१२]

## नेपालमा मकरसंक्रान्ति पर्व

नेपालका वर्षभरमा मनाइने विभिन्न मेलापर्वहरू मध्ये मकर संक्राति पर्व निक्कै महत्त्वपूर्ण मानिन्छ । यो पर्व नेपालका विभिन्न स्थानहरूमा अलग अलग ढंगले मनाउने गरिन्छ । जाति विशेषमा पनि यो पर्व मनाउने परम्परामा सामान्य विभेद रहेको पाइन्छ । यति हुँदा हुँदै पनि यो पर्व ज्यादागरी स्नानसंग निकट रहेको देखिन्छ, किनकी उक्त अवसरमा नदी, नदीमुख, संगमहरू र कुण्ड एवं पोखरीहरूमा यस्तो मेला लाग्ने गर्दछ । रूरूक्षेत्र[१३], वराहक्षेत्र लगायतका नेपालका विभिन्न कुण्ड, ताल, नदी र नदी मुखमा उक्त अवसरमा ठूलाठूला मेलाहरू लाग्ने गर्दछन् । उक्त अवसरमा नदीमा स्नान गर्ने, सूर्यलाई अर्घ्य चढाउने र त्यस स्थानका देवी देवताको दर्शन एवं पूजन चर्ने चलन छ । विभिन्न प्रकारका खाद्यान्नहरू उक्त अवसरमा दान दक्षिणा पनि गरिन्छ । काठमाडौं उपत्यकामा मकर संक्रान्तिका दिन शंखमूलमा ठूलो मेला लाग्ने गर्दछ । उक्त स्थानमा स्नान गरेपछि त्यहाँ छेउमा रहेको रातो मत्स्येन्द्रनाथको मन्दिरमा गएर दर्शन गर्ने मानिसहरूको भीड भाड लाग्दछ ।[१४]

मकर संक्रान्तिको दिन नदीमा नुहाउन र मन्दिरमा पूजा गर्न जान नसक्ने मानिसहरू घरमा नै स्नान गर्ने, घर-आँगन लिपपोत गरी सफा राखेर कुलदेवता र इष्टदेवताको पूजा उपाशना गर्ने गर्दछन् । घ्यू, चाकु, तिलका लड्डु, तरूल, खिचडी आदि लगायतका खानेकुरा बनाई चढाउने, दान गर्ने र खाने, सत्यनारायणको व्रत बस्ने आदि जस्ता कार्यहरू गर्दछन् ।[१५] उक्त अवसरमा भक्तपुरमा चाहिँ दिपंकर बुद्धको पूजा र पंचदान गर्ने समेत चलन छ ।[१६]

माघे संक्रान्तिको दिन भक्तपुर तौमढि टोलको तिलमाधव स्थानमा समेत ठूलो मेला लाग्दछ । तिलमाधवको उत्पत्ति र त्यहाँको मेलाको सुरूवात सम्बन्धी एउटा किंवदन्ति जनमानसमा प्रचलित छ । उक्त किंवदन्ति अनुसार एक पटक माघे संक्रान्तिका दिन एक जना व्यापारीले तिलमाधव स्थानमा बसेर एक भारी तिल बेच्न लाग्यो । उसले आफूसंग भएको तिल बेच्दैजाँदा पनि यसमा कत्ति पनि कमी नआएकाले आश्चर्य चकित भएर उसले आफ्नो तिलमा के भयो भनी खोस्रेर हेर्न पुग्यो । त्यस व्यापारीले आफूले बेच्दै गरेको तिलभित्र एउटा विष्णुको प्रतिमा पायो र त्यसलाई उसले त्यहीं

---

*१२. काणे, पूर्ववत नं. ३, पृ. ८४*
*१३. राम निवास पाण्डे, स्याक्रिड कम्प्लेक्स अफ रूरूक्षेत्र, (दिल्ली: एड्रोइट पब्लिशर्स, २०००), पृ. १५२*
*१४. मेरी एम् एण्डरशन, द फेष्टिभल्स अफ् नेपाल, (दिल्ली: रूपा एण्ड को १९८८), पृ. २२४ ।*
*१५. सत्यमोहन जोशी, नेपाली चाडपर्व, (काठमाडौं: नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान), पृ. ५१ ।*
*१६. सत्यमोहन जोशी, नेपाली चाडपर्व, (काठमाडौं: नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान), पृ. ५१ ।*

सम्मानपूर्वक स्थापना गरी मन्दिर समेत निर्माण गरायो । यसै कारणले गर्दा उक्त स्थानको नाम तिलमाधव स्थान भएको र त्यसैको स्मरण स्वरूप मकरसंक्रान्ति मेला लगाउन लागिएको मानिन्छ ।[१७] मकर संक्रान्ति मेलाको शुरूवात सम्वन्धी एउटा किंवदन्ति महाभारतको कथासंग पनि जोडिएको छ । उक्त कथा अनुसार भीष्म, अर्जुनको वाणले ढलेपछि उनी उत्तरायण नहुन्जेलसम्म वाणको शैयामाथि नै सुतिरहे पछि मकरसंक्रान्तिको दिन उत्तरायण शुरू भएपछि मात्र प्राण त्याग गरेका थिए भन्ने किंवदन्ति छ ।[१८] उत्तरायणमा प्राण त्याग्ने मानिसले पुनर्जन्म लिनुपर्दैन भन्ने मान्यता अनुरूप उनले त्यसो गरेको वताइन्छ र उक्त घटनाको स्मरण स्वरूप नै मकरसंक्रान्ति पर्व मनाउन लागिएको विश्वास छ ।

नेपालमा मकरसंक्रान्ति पर्व निक्कै धुमधामकासाथ मनाउने चलन छ । यो पर्व मनाउँदा नेपालीहरू पौषमसान्त कै दिनदेखि उपवास बस्ने, संक्रान्तिको दिन विहानै खोलाहरूमा गएर स्नान गर्ने, पूजापाठ गर्ने तथा अन्य प्रकारका कृत्यहरू गर्ने गर्दछन् । तिलको लड्डु बनाएर खाने तथा यसलाई दान गर्ने पर्वको रूपमा पनि मकरसंक्रान्ति पर्व निक्कै प्रख्यात छ । जाडोको समयमा तिल तथा यसको तेल धेरै उपयोगी हुने गर्दछ, त्यसर्थ पनि यस पर्वको अवसरमा तिललाई विशेष महत्त्व दिने गरिएको हो । मकर संक्रान्तिका अवसरमा नेपालीहरू तरूल, सुठुनी लगायतका माटोमुनी फल्ने वस्तुहरू उसिनेर खाने, वासी वनाएर खाने तथा त्यसलाई दान गर्ने गर्दछन् । न्यानोपनको उदय हुँदै गएकोमा खुशियाली मनाउन यो पर्व औशत नेपालीहरूले मनाउने गरेको पाइन्छ ।

## वराहक्षेत्रको मकरसंक्रान्ति मेला

वराहक्षेत्र पूर्वी नेपालमा सुनसरी जिल्लाको उत्तर-पश्चिम सिमाना स्थल कोका कोशी संगममा पर्दछ । उक्त स्थलमा विभिन्न अवसरहरूमा साना ठूला कैयौं प्रकारका मेलापर्वहरू लाग्ने गर्दछन् । कार्तिक पूर्णिमा, पौषे औंशी, मकर संक्रान्ति, वैशाख शुक्लद्वादशी लगायतका प्रत्येक पूर्णिमाहरू त्यहाँका मेलापर्वका अवसरहरू हुन् । तिनीहरू मध्ये कार्तिकपूर्णिमाको अवसरमा यस स्थानमा सबैभन्दा ठूलो मेला सबैभन्दा लामो समयसम्म लाग्ने गर्दछ । त्यहाँको दोस्रो ठूलो मेला चाहिँ मकरसंक्रान्ति मेला हो ।

वराहक्षेत्रमा मकरसंक्रान्तिको अवसरमा दुई दिनसम्म मेला लाग्ने गर्दछ । पौष मसान्तको दिन बिहानैदेखि त्यहाँ तीर्थ, स्नान एवं पूजन गर्ने भक्तजनहरूको अलावा व्यापारीहरू समेत जम्मा हुने गर्दछन् । उक्त दिन मेलाको तयारीको दिनको रूपमा रहने गर्दछ । पौष मसान्तको दिन दिउँसो वराहक्षेत्रमा भक्तजनहरू बसोवास लगायतका अन्य कुराहरूको व्यवस्थाका लागि जुट्दछन् । त्यस दिन साँझमा जाग्राम बस्ने तथा भजन कीर्तन गर्ने कार्य हुन्छ ।

मकर संक्रान्तिका दिन वराहक्षेत्रमा भक्तजनहरू सर्वप्रथम कोका कोशी संगमस्थलमा स्नान गर्दछन् । त्यसपछि सूर्यलाई अर्घ चढाएपछि वराहविष्णुको दर्शन एवं पूजन गर्दछन् । भक्तजनहरू उक्त अवसरमा आफ्नो सोच र क्षमता अनुरूपको पूजन गर्ने गर्दछन् । तरूल, तिलका लड्डु फलफूल चढाउदै फूल, अक्षता, धूप आदिले वराह विष्णुको पूजन हुने गर्दछ । त्यस दिन भक्तजनहरूले त्यस स्थानमा आ-आफ्नो भाकल अनुरूपका धार्मिक कृत्य पनि गर्दछन् । लाखवत्ति वाल्ने, ब्राह्मणलाई दान दक्षिणा गर्ने, मन्दिरमा पूजा पाठ लगाउने तथा वराहविष्णुको नाममा अनुदान दिने, निर्माण कार्य गरिदिने तथा त्यस्तै कार्यहरू गर्ने गर्दछन् । उक्त अवसरमा सबै जात, थर र वर्गका मानिसहरू मेलामा सहभागी हुन्छन् । धार्मिक भावनाबाट मात्र नभएर मनोरञ्जनका उद्देश्यबाट, व्यापार व्यावसाय गर्न एवं आफन्तहरूसंग भेटघाट गर्न त्यहाँ जम्मा हुने मानिसहरू पनि त्यत्तिकै मात्रामा रहन्छन् । त्यस दिन विहान वराह विष्णुको नाममा मन्दिरको तर्फबाट विशेषपूजाको व्यवस्था गरिएको हुन्छ । विशेष पूजाको अवसरमा वराह विष्णुलाई तरूल, तिलको लड्डु, अपूंगो र सिजन अनुसारको फूलपातहरू चढाउने गरिन्छ ।

---

*१७. एण्डरशन, पूर्ववत नं. १४, पृ. २२४*

*१८. एण्डरशन, पूर्ववत नं. १४, पृ. २२५*

उक्त अवसरमा भारततर्फबाट त्यहाँ दर्शनार्थ भेलाहुने मानिसहरूको संख्या कार्तिके मेलाको तुलनामा केही कमी हुने गर्दछ । भारतमा गंगाको किनारी भागका विभिन्न स्थलहरूको साथै अन्य ताल, कुण्ड, नदी, नदीमुख आदि जस्ता स्थानहरूमा समेत मेला लाग्ने हुनाले उक्त अवसरमा उपस्थित हुने भारतीयहरूको संख्या कम हुने गरेको हो ।

पौष मसान्तको साँझ कोकामुख वराहक्षेत्रमा चारैतिरबाट मानिसहरू जम्मा भैरहेका हुन्छन् । पुराण भन्ने र सुन्ने, भजन किर्तन गर्ने र विविध प्रकारका नाचगान गरी रात बिताउने मानिसहरूको संख्या अति धेरै हुन्छ । त्यहाँको मन्दिर प्राङ्गण र कोका कोशी संगम स्थलमा मानिसहरू भेला भै रहेका हुन्छन् । अनेक प्रकारका सरसामानहरू खरिद गर्ने, आफन्तहरूलाई भेट्ने, स्नान एवं पूजन गरी पूण्य कमाउने र भाकल अनुरूपका अन्य कार्यहरूमा मानिसहरू तल्लिन रहने गर्दछन् । राती सुत्ने भन्दा जाग्राम बस्ने मानिसहरूको संख्या ज्यादा हुने गर्दछ । वृद्ध, वयस्क, केटाकेटी सबै प्रकारका मानिसहरू यस मेलामा समान रूपमा मेला भर्न आउने गर्दछन् । पुरुषहरूको तुलनामा त्यहाँ आउने स्त्रीहरूको संख्या ज्यादा हुने गरेको देखिन्छ ।

पौष मसान्तका दिनदेखि वराहक्षेत्रमा मानिसहरू जम्मा हुने भए तापनि तिनीहरूको त्यहाँको बसाई अती नै छोटो हुने गर्दछ । भोलिपल्ट स्नान गरी वराह भगवानको दर्शन र पूजन पछि उनीहरू त्यहाँबाट फिर्न लाग्दछन् । मकर संक्रान्तिकै दिन पनि बाहिरबाट प्रशस्त मात्रामा मानिसहरू त्यहाँ आई नै रहन्छन् । त्यहाँदेखि निक्कै परपरका विभिन्न स्थानहरूबाट बसहरूले तीर्थ यात्रुहरू ओसारपसार गरिरहने गर्दछन् । चतारासम्म बसबाट यात्रा गरेपछि तीर्थयात्रुहरू करिब आठ कि.मी. पैदल हिँडी वराहक्षेत्र पुग्ने गर्दछन् ।

वराहक्षेत्रको कोका कोशी संगममा मकर स्नान गर्ने तथा त्यहाँ मेला लाग्ने चलन कहिलेदेखि चल्यो भन्ने कुरा स्पष्ट पार्ने प्रमाणहरूको अभाव छ । कतिपय चाडपर्व र उत्सवहरूको शुरूवात किंवदन्तीबाट मात्र पनि पत्ता लगाउनु पर्ने हुन्छ । यसै क्रममा मकर स्नान गर्ने कार्यको थालनी इश्वीको प्रारम्भ भन्दा अगाडि जान नसक्ने कुरा केही विद्वानहरूले बताएका छन् ।[१९] तापनि वराहक्षेत्र कोका कोशी संगमस्थलमा स्नान गर्ने परम्परा त्यो भन्दा हजारौं वर्ष अगाडिदेखि नै चलेको पाइन्छ । किनकी ईशापूर्व बाऱ्हौं शताब्दीतिर नै रचना गरिएको मानिने माहाभारत महाकाव्यले नै कोका कोशी संगमस्थलको कोकामुख तीर्थमा स्नान गर्दा प्राप्त हुने फलको बारेमा चर्चा गरेको पाइन्छ । उक्त ग्रन्थका अनुसार "कोकामुख तीर्थमा स्नानगर्ने मानिसले पूर्वजन्मको विवरण स्मरण गर्न सक्दछ, साथै अन्य विभिन्न स्थानहरूमा स्नान गरे सरहको फल पाउँछ" भनिएको छ ।[२०] हुनत कोकामुख तीर्थमा कुन अवसरमा स्नान गर्दा त्यस्तो फल प्राप्त हुन्छ भन्ने विवरण उक्त ग्रन्थले स्पष्ट पारेको छैन, तापनि त्यहाँ स्नान गर्न भक्तजनहरूको भेलाहुने मुख्य दुईवटा अवसरहरू कार्तिक पूर्णिमा र मकर संक्रान्ति नै भएकाले त्यस स्थानमा महाभारत कालदेखिनै स्नानगर्ने परम्परा रहेको थाहा हुने गर्दछ । मकर संक्रान्तिको तुलनामा स्नान, भगवानको दर्शन, पूजन र दानदक्षिणा गर्ने पवित्र दिनको रूपमा कार्तिक पूर्णिमालाई ज्यादा महत्त्वपूर्ण मान्ने चलन छ । यस अर्थमा इश्वीको प्रथम शताब्दीतिरदेखि मात्र विभिन्न जलासय, जलकुण्ड, नदी एवं नदी मुखमा मकर नुहाउने चलन चलेको भए तापनि कार्तिक पूर्णिमाको कोकामुख तीर्थस्नान परम्परा लामो समयसम्म चल्दै पछि यसबाट मकर स्नान परम्परा समेत विकसित हुन पुग्यो ।

महाभारत महाकाव्यको समय भन्दा पछाडिको लामो समयसम्म रचना गरिएका ग्रन्थहरूमा यहाँको मकर स्नानको बारेमा चर्चा गरेको देखिदैन । पछि गएर पौराणिक कालमा चाहिँ मकरसंक्रान्ति र मकर स्नानको महत्त्व व्यापक रूपमा बढेर गयो । विभिन्न पौराणिक ग्रन्थहरूले समेत कोकामुख तीर्थमा गरिने स्नानलाई ज्यादा मात्रामा महत्त्व दिए, तर मकर संक्रान्तिकै दिन त्यहाँ स्नान गर्नु पर्दछ भन्ने कुरा चाहिँ स्पष्टसंग उल्लेख गरेनन् । पुराण साहित्यको रचना गर्ने कतिपय विद्वानहरूले यस क्षेत्रको समेत भ्रमण गरेका थिए, जस्तो ब्रह्मा, विष्णु र वराहपुराणका रचयिता यो क्षेत्रको भ्रमणमा आएका थिए र यस क्षेत्रको यथार्थ विवरण प्रस्तुत गरेका थिए भन्ने कुरा ती पुराणहरूका विभिन्न प्रसंगहरूबाट

---

*१९. काणे., पूर्ववत नं. ३, पृ. ८२ ।*

*२०. रामनारायण दत्त शास्त्री (हि.अ.र सं), महाभारत, तृतीय खण्ड, पाँचौं. सं. (गोरखपुर: गीताप्रेश, २०४५) पृ. १२०२ ।*

स्पष्ट हुने गर्दछन् ।[२१] तथापि उनीहरूले यहाँको मकर स्नानलाई चाहिँ महत्त्व दिएको देखिँदैन ।

ऐतिहासिक कालमा समेत वराहक्षेत्रको भ्रमणमा नेपाल र भारतका टाढा टाढादेखिका मानिसहरू आउने गर्दथे । ईश्वीको पाँचौ शताब्दीतिर बंगालको दामोदरपुर क्षेत्रका ऋभूपाल नामक व्यापारी यहाँ आएका थिए । यिनले कोकामुख स्वामी र स्वेतवराह स्वामीको दर्शन र पूजन गरेको समेत ऐतिहासिक प्रमाणहरू प्राप्त छन् ।[२२] उक्त समयसम्ममा यहाँ कैयौं भक्तजनहरू कार्तिक स्नानको साथसाथै मकर स्नानकालागि आएको हुनुपर्दछ । तर उचित ऐतिहासिक प्रमाणहरूको अभावमा त्यसको बारेमा लेखाजोखा गर्न सकिएको छैन । साथै उनीहरू कोकामुख तीर्थमा स्नान गर्न कुन समयमा आउँथे भन्ने कुरा पनि स्पष्ट छैन, तापनि मकर स्नानगर्न समेत उनीहरू आउने गरेको हुनुपर्दछ भन्ने मान्यता चाहिँ राख्न सकिन्छ ।

मध्यकालभर वराहक्षेत्र कोकाकोशी संगममा मकर स्नान गर्ने मानिसहरूको संख्या त्यति कै बढेर गयो । त्यो युगमा भारतवर्षका अन्य थुप्रै स्थानहरूले समेत ख्याति कमाउँदै गए । तर त्यो युगका यस सम्बन्धी लिखित प्रमाणहरूचाहिँ पाइएका छैनन् । आधुनिक कालसम्ममा आइपुग्दा कैयौं यस्ता नदी किनार, नदीमुख, कुण्ड र तलाउहरू मकर स्नानका लागि उपयुक्त स्थानको रूपमा परिचित हुँदै गए । त्यस्ता स्थानहरूको एकातर्फ ज्यादा मात्रामा प्रचार प्रसार भयो भने अर्कोतर्फ ती स्थानहरूमा विकासका पूर्वाधारहरूको पनि विकास हुन पुग्यो । अन्य क्षेत्रको तुलनामा यहाँ विकास निमार्णका तथा भौतिक सुविधाहरूको विस्तार हुन नसकेकाले कोकामुख वराहक्षेत्रमा मकर स्नान गर्नआउने मानिसहरूको संख्या घट्दैगयो । मध्यकालको उत्तरार्धतिर यहाँको स्नान गर्ने मानिसहरूको संख्या निक्कै घटिसकेको थियो ।[२३] त्यो समयसम्ममा मकर स्नान गर्ने क्रम विभिन्न स्थलहरूमा समेत बढेर, यहाँ आउने मानिसहरूको संख्यामा केही कमी आए तापनि यसले निरन्तरता चाहीँ पाइ नै रह्यो । हाल आएर वराहक्षेत्र कोकामुख तीर्थमा मकर संक्रान्तिको दिन स्नान गर्न आउने नेपालीको तुलनामा भारतीयहरूको संख्या निक्कै न्युन रहेको देखिन्छ । भारतका विभिन्न नदीतटहरूमा मकर स्नान गर्ने कार्यमा वृद्धि भएकाले यहाँ आउने मानिसहरूको संख्यामा कमी आएको हो । यति हुँदाहुँदै पनि कार्तिक स्नान गर्न यहाँ आउने मानिसहरुको संख्या चाहिँ अत्यधिक छ ।

**निष्कर्ष**

नेपालका विभिन्न नदी, तलाउ, कुण्ड आदि स्थानहरूमा मकर स्नान गर्ने चलन छ । त्यस्ता जल स्थलहरूमध्ये सर्वाधिक पुरानो मकर स्नान स्थल कोकामुख वराहक्षेत्रको कोकाकोशी संगम स्थल हो । नदी किनारमा मकर स्नान गर्दा प्राप्त हुने पूण्य हिन्दूहरूका पुराणहरूले नै स्पष्टसंग व्याख्या गरेको पाइने हुनाले पूण्य प्राप्तिका लागि त्यहाँ स्नानगर्ने चलन चलेको हो । यहाँ इशापूर्व १२०० देखि स्नान गर्ने चलन रहेको साहित्यिक प्रमाण र एक हजार पाँचसय वर्ष अगाडि तिर स्नान गर्ने चलन रहेको ऐतिहासिक एवं पुरातात्त्विक प्रमाणहरू पाइएका छन् । भारतवर्षमा मकर स्नान गर्ने परिपाटीको शुरूवात हुनु भन्दा अगाडिदेखि नै त्यहाँ कार्तिक स्नान गर्ने चलन थियो । पछि कार्तिक स्नानको निरन्तरताले मकर स्नानको समेत रूप लियो । तर यसबाट कार्तिकस्नानमा समेत कमी चाहिँ आएको देखिँदैन ।

---

२१. *वराह पुराणमा वराहपर्वतका उपतीर्थहरूको लामो सूची दिइएको छ । उक्त पुराणमा ती उपतीर्थमा पूण्यकर्म गर्दा प्राप्त हुने फलहरू समेत स्पष्टसंग उल्लेख गरेको पाइन्छ । चक्रतीर्थ, शिवकुण्ड, सूर्यकुण्ड लगायतका वराहक्षेत्र उत्तर पूर्व कोका नदी जलाधारका विभिन्न स्थानहरूको जुन रूपमा वराह पुराणले चर्चा गरेको छ, ती स्थानहरू आजसम्म पनि त्यती नै रमणीय र मनमोहक छन् । वराहपर्वतमा अवस्थित वराहक्षेत्रदेखि शंखधारा, गोमुखा तथा शिद्धाश्रमसम्मका ती रमणीय स्थानहरूमा रहेका जलश्रोत, तलाऊ, फाँट आदिको स्थलगत अध्ययन गरेको खण्डमा वराह पुराणका रचयिता ती स्थानका जलस्रोत, छहरा, कुण्ड लगायतका प्राकृतिक वस्तुहरूदेखि अती प्रभावित भएका थिए र उनले ती स्थानहरू घुम्दै उक्त पुराण रचना गरेका थिए भन्ने कुरा जो कोहिले पनि स्वत: नै अनुमान गर्न सक्दछ । ब्रह्म पुराणले पनि भौगोलिक अवस्थितिलाई त्यति ख्याल नगरी ती स्थानहरूको महत्त्व दर्शाएको देखिन्छ ।*

२२. *डि. सी. सरकार (सं.) सेलेक्ट इन्स्क्रिप्सन्स् वियरिङ्ग अन इण्डियन हिष्ट्री एण्ड सिभिलाइजेशन, भोल १, दोस्रो सं. (कलकत्ता: कलकत्ता युनिभर्सिटी, १९६५), पृ. ३३६-३३९*

२३. *फ्रेन्चिज वुखानन ह्यामिल्टन, एन् एकाउण्ट अफ द किंगडम अफ् नेपाल एण्ड अफ् द टेरिटोरिज् एनेक्स्ड टु दिस डोमिनियन वाइ द हाउस अफ् गोरखा, १९१८ थर्ड रिप्रिन्ट, (नयाँ दिल्ली: एशियन एजुकेशनल सर्भिसेज, १९९७), पृ १५२ ।*

# स्याङ्जास्थित चौबिसी राज्यहरूको इतिहास

– डा. राजाराम सुवेदी

## नेपालमा शाहवंशको आविर्भाव

कुनै पनि कुराको आविर्भावको तात्पर्य उत्पत्ति, आविष्कार, सामु देखिने कार्य, वाह्य दृश्य रूपमा प्रकट हुने कार्य आदि हुन्छ । कुनै वंशको उत्पत्ति, अवतरण, आविष्कार भन्नु पनि त्यस वंशको फैलावट, उन्नति र बढेको खानदान भन्नु हो । शाहवंशको उत्पत्तिको कुरा पनि खोज्दै जाँदा कम महत्त्वको छैन । हरेक वंशको उत्पत्तिको कथा र पृष्ठभूमि भए झैं वर्तमान नेपालका शाहवंशीय राजा र उनका अन्य वन्धुहरूको पनि मूलस्थल तथा विस्तारको लामो इतिवृत्त प्राप्त भएको छ ।

शाहवंशको खोजी गर्दै जाँदा मध्य एशियाको मंगोल र खस जातिसँगै सम्बन्ध रहेको थाहा पाइएको छ । किनभने मध्य एसियाको फिरन्ते जाति श्वेत हूँण (सस्कृतमा हूँण, चिनीया भाषामा Hsiungnu) जाति विक्रमपूर्व २००० देखि १५०० मा चीन प्रवेश गऱ्यो । घोडचढी जाति योद्धा र बलिष्ठ हूँणहरूले चीनलाई सैन्य बलले जीती आफनो अधीनमा पार्न समर्थ भए । विक्रमको आरम्भमा दुई शतक त्यहाँ दखल गर्दा चीनको हान जातिसँग उनिहरूको टक्कर पर्दा हूँणहरू पराजीत भई यत्रतत्र तितर-वितर भए । त्यस पराजय पछि श्वेतहूँण जातिको एक चोइटो दक्षिण पश्चिम एशियातिर लाग्यो र पुगनपुग तीन शताब्दीतक यत्र तत्र रही फिरन्ते जीवन बिताउन वाध्य भयो । उनीहरूको एक शाखालाई कुशुण्डा राउतराज पनि भनिन्थ्यो । ठाउँठाउँ बदलेर झुण्ड मिली घुम्ने, शिकार गर्ने श्वेत हूँण जातिले विस्तारै सभ्यताको कुरा टिपे ।

विक्रमको पाँचौं शताब्दीमा समग्र हूँणजाति दुई भागमा विभाजित भयो । पहिलो समूह अट्टिला (Attila) दोस्रो समूह तोर्मान (Tormana) का नामले इतिहासमा पहिचान गरिन थाल्यो । विक्रमको ५०० पूर्वमा अट्टिला जातिको नेतृत्वमा कटकसेनाले यूरोपीय महादेशमा आक्रमण गर्न अगाडि बढ्यो । अन्ततः त्यस शक्तिले रोमको साम्राज्य माथि धावा गरी प्राचीन रोमको सभ्यता नष्ट भ्रष्ट पाऱ्यो । रोमन साम्राज्य अस्तव्यस्त बनेपछि सुरक्षार्थ किल्लाबन्दी गर्ने परम्परा आरम्भ भयो । रोममा फैलिएको अव्यवस्थालाई काबु पार्न यूरोपीय जाति समर्थ भएन । ४०० वि.पूर्व मा तोर्मानको नेतृत्वमा दक्षिण पश्चिम एशियामा आक्रमण गरी गुप्त साम्राज्यसँग टक्कर लिन पुग्यो । त्यतिबेला यस जातिलाई एकै शव्दमा खस भनियो । त्यस जातिले गुप्तहरूलाई पूर्णतः पराजय गर्न नसके पनि आक्सस उपत्यका र गान्धारदेशमा आफ्नो शासन स्थापना गऱ्यो । त्यही हूँण शक या खस जातिले

इरान, इराक, पर्सियामाथि विजय गर्‍यो र सम्राट शाह फिरोजलाई हत्या गरी खसहरूले फारसको वल्ख क्षेत्रलाई राजधानी गराए ।

त्यस श्वेत हूँण, शक, तोर्मन या खस जातिले गान्धारबाट पून: भारतमाथि आक्रमण गरी सप्तसिन्धु र पञ्चनद पञ्जाब क्षेत्रमा विजय गर्‍यो । खसहरूको एक समूह धेरै पछि शिख्ख भयो । सम्राट स्कन्द गुप्तको राज्यकालमा भारतीय उपमहाद्वीपमा राजनीतिक शिथिलता व्याप्त रहेको मौका पारी खसहरूले जम्बू, काश्मीर, पञ्जाव, राजस्थान, मालव, मारवाड, सालवा, उत्तरप्रदेश, हिमाञ्चल जस्ता क्षेत्रमा प्रभाव पारी शाकलक्षेत्र शियालकोट (पञ्जाब) र हिमाञ्चल प्रदेशलाई दोस्रो राजधानी घोषित गरे । त्यही खस जाति मरहट्ठा, रजपूत, शिख्ख, गुर्जर, जाट, **कान्यकुब्जी,** मध्यदेशी, पाहाडी, मग्वर, गोरोङ तथा आभीर, अहीर, रावत, तांमां, केरौंत तथा शाक्य जातिका छुट्टाछुट्टै समुदायमा विभक्त हुन थाले ।[1]

वि.सं. ४५०-७०० सम्ममा मिहीरकुलीन गोल्लस सम्राट तोरमनका पुत्रले भारतमा त्यही खस जातिको राज्य विस्तार गरेर आफ्नो खानदानलाई माथि उचाल्दा श्वेतहूँणहरूको जीवनपद्दतिमा उन्नयन भयो । त्यस घुमन्ते जाति वर्वर पहिचान त्यागी आर्य राजपूत शासक परिवारमा परिगणित हुन थाल्यो । प्राचीनकालमा मूलबाट चोइटिई जंगल पसेका राउटेराजी, कुशुण्डा, ऐरी, वनमान्छे, चेपाङ, प्रजा तथा अरू नामले परिचित भई आए । ग्वालियरमा प्राप्त तोरमानको लेख यस कुराको साक्षी मानिन्छ । यसप्रकार विक्रमको आठौं शताव्दीमा आइपुग्दा त्यो राजपूत जातिका ३६ टुक्रा भई वेग्लाबेग्लै पहिचान बोक्न थाले । राजपूतवर्ग पेशाकका आधारले राजकाज गर्ने भएवाट क्षत्रीय कुलमा सम्मिलित गरियो । ती शाखाहरू यस्ता छन्:- १. गुहिल्ल, २. राठौड्ड, ३. चौहाण, ४. सिन्धिया, ५. जाटिया, ६. गुर्ज्जारा, ७. चाल्लूक्य, ८. राष्ट्रकुट्ट, ९. चन्देल्ल, १०. परमाई, ११. कच्छमघट्ट, १२. राहदावल्ला, १३. वालाश्वी, १४. वज्जाडडा, १५. जेतूहाई, १६. सोलंकीया, १७. परिहार्र, १८. चाम्वाडिया, १९. सम्भरिया, २०. यादव्वी, २१. वनकर्रा, २२. गोण्डिया, २३. भारीया, २४. मेट्टीया, २५. चहमौनिया, २६. कपिस्सा, २७. जावल्लीया, २८. पाल्ल, २९. मल्ल, ३०. चन्दरै, ३१. सेनकर्रा, ३२. साहीकर्रा, ३३. खाँणखोण्ड, ३४. समाल्ल, ३५. रातृल्ल, ३६. रौताल्ला आदि ।[2]

माथिका ३६ थर राजपूतहरूका पुराना थर हालसम्म केही सुधारिएको रूपमा शाखा प्रशाखमा विभक्त भएर कायम रहेका देखिन्छ । नेपालका शाहवंशीय राजाहरू खाँणखोण्डबाट खाँण त्यसपछि शाह भएको कुरा इतिहास सिद्ध भएको र केही ठकुरीहरू शाह नभनी त्यसै वंशकाले, खाँण भनी आफ्नो थर पहिचान गराउँछन् ।

शाह थरको उत्पत्ति सम्बन्धमा पेशावर विश्वविद्यालयका प्राध्यापक डा. हुसेन खानको मत अलि पृथक रहेको जानकारी हुन्छ । भारतीय इतिहासमा कुशानवंशीय शासनको लामो इतिहास छ । कुशानकालमा साहो (Shao) भनी राजा र सम्राटलाई उल्लेख गरी मुद्राहरू आहत गरिएका हुन्थे । राजा कनिष्कका ताम्रमुद्रामा पनि साहो भनी उत्कीर्ण गरिएको छ । उनैका स्वर्णमुद्रामा नानो साहो भनिएको छ । नानो साहो भन्ने पद यूनानी शब्द बासिलेअस बासिलेअबाट अनुदित भएको हो । फारसी भाषामा क्षयतियानम् क्षयतिया (राजाको पनि राजा) पदको प्रयोग भएको कुरा एक्यामेनियम लेखोटमा पाइन्छ । पर्सियाको पद्वीमा साहन् साह पनि कुशानकालीन शब्दबाट अनुकरण गरिएको देखिन्छ । केदार सम्प्रदायका कुशान राजाहरूले पनि साहो शब्दबाटै "शाही" थरको स्थापना गराएका थिए । त्यसपछि भने विभिन्न राजाहरूले आफूलाई शाही जाबुब्ला, देवशाही खिङ्गिला, शाही तोर्मांना जस्ता पदहरू कुर्रा अभिलेख तथा काश्मीरको इतिहास समेटिएको राजतरङ्गीबाट बुझिएको छ । वि.सं. ३९२-४३२ सम्म राजा भएका समुद्र गुप्तको अलाहावाद अभिलेखस्तंभमा देवपुत्र शाहीशाहम्शाही भनी उत्कीर्ण गरिएको छ । त्यसैले शाही पद कुनै निश्चित राजवंशले धारणा गर्ने भन्ने नियम नरहेको थाहा हुन्छ ।[3]

हामीलाई अफगानिस्थानका अमीरहरूको थर शाह थियो भन्ने थाहा छ । गान्धार र पञ्जावका राजाहरू पनि मोहम्मद गजनवीका साम्राज्यमा शाह थर भएका थिए भन्ने पनि हामीलाई जानकारी छ । हिन्दू शाही राजाहरू भारतको

दक्षिणबाट काश्मीरसम्म फैलिएका थिए । ती क्षेत्र वाहेक पूर्व र पश्चिममा बोलोर शाह र शुगन शाहका राज्यहरू पर्थे । टर्कीको छेउछाउमा भट्ट थर भएका राजाहरूले राज्य गर्दथे । त्यसका वासिन्दालाई भट्टवारयण भनिन्थ्यो । गिल्गित, अश्विरा, सिल्टा र अस्काईचीनमा पनि शाही थर भएका राजाहरू थिए । त्यहाँका वासिन्दाले तुर्क भाषा बोल्दथे । तुर्कीहरूको भाषा सर्वप्राचीन मानिएको छ । स्मरण रहोस् तुर्क भाषाका धेरै शब्दहरू ऋग्वेदसँग ट्वाक्कै मिल्दछन् । तुर्क र काश्मीरको बीच लामो व्यापार चल्दथ्यो । त्यति हुँदा पनि नेपालमा प्राचीनकालबाट शासन गर्ने राजाहरूले आफूलाई शाह भन्ने नगरेको पाइएको छ । त्यसो हुनुको कारण ती राजाहरूको सम्बन्ध त्यताका शासकहरूसँग हुनलाई अनुकूल नरहेको अनुमान गर्न सकिन्छ । तत्कालीन राजाहरूले आफूलाई महाराजा र महाराजाधिराज जस्ता पद्वीले विभूषित गराउँथे । त्यस विभूषणको कारण उनीहरूमा चन्द्रगुप्तको प्रभाव रहेको स्पष्ट हुन्छ । गोरखाको प्रवेशपछि मात्र नेपालका राजा शाहवंशीय भएका हुन् ।

नेपालको परिप्रेक्ष्यमा शाहवंशको थर कहिलेबाट आरम्भ भयो भन्ने कुरा निश्चितसँग भन्न सकिएको छैन । नेपालमा प्राप्त चित्रविलाश र अन्य वंशावलीबाट शाह थर कास्की र लमजुङबाट आरम्भ भएको कुरा थाहा पाइएको छ ।[४] भाषा वंशावलीमा कास्कीका राजा कुलमण्डल शाहले दिल्लीका वादशाहबाट शाहको उपाधि पाएपछि पछिकाले त्यही लेख्न लागेको उल्लेख परेको छ । कास्कीका राजा कुलमण्डल शाहको वि.सं. १५२४ को ताम्रपत्रको व्यहोरामा जगतिखान र कुलमण्डल भनी शीरव्यहोरा उल्लेख गरिएबाट उनले "शाह" पद त्यसपूर्व नै पाइसकेको स्पष्ट हुन्छ ।[५] वि.सं. १५२४ पूर्वकालमा दिल्लीका वादशाह को थिए र "शाह" पद पाए त्यस कुराको पनि निरूपण गरौं । ई. १४२८ मा अहमद शाह, फिरज शाह, मुहम्मद शाहहरूले भारतमा खिल्जीवंशको राज्य स्थापना गरेका" र कुलमण्डल शाहले उनैमध्ये कुनै वादशाहबाट शाह पद पाएको अनुमान गर्नुपर्ने भएको छ ।[६] एक लेखकले बाबर, हुमायूँ, शेर शाहबाट कुलमण्डल शाहले शाह पद पाएका र सम्भवत शेर शाह पहिले शेरखान भन्ने नामबाट प्रख्यात भएका हुँदा उनले खानबाट शाह भएबाट कास्कीका राजाले पनि त्यसै गरेको अनुमान गरेका छन् ।[७]

नेपालका शाह राजाहरूको पुराना थर खाण पनि हो । खाणको अर्थ खान या मुसलमानी थर भएको कुरा अनुमान गरेको भएपनि त्यो मिल्दोजुल्दो छैन । खान पद दिल्लीका तूर्क र अफगान राजाहरूले लिएको थाहा पाइन्न । बरू वि.सं. १३५१ का चिनीया सम्राट कुबलाई खाँको प्रभाव नेपालमा तिब्बत हुँदै आएको आशंका गरिएको छ । नेपालको सन्दर्भमा त्यो कुरा मिल्दोजुल्दो पनि लाग्दैन । किनभने वर्तमान नेपालको गण्डकी प्रश्रवण क्षेत्रलाई मध्यकालमा बाह्र मगराँत भनिन्थ्यो । त्यस समयमा मगरहरूको जनजिब्रो अनुसार कुनै घरको, छिमेकको, रियासतको र राज्यको प्रमुखलाई "खान" अनि उनीहरूको परिचरलाई "खवासे" भनिन्थ्यो । "यस घरका खानखवास को-को हुन्" भनी सोधखोज गर्ने परम्परा अद्यापि रहेबाट सो कुरा सिद्ध हुन्छ । (परिशिष्ट १) त्यसकारण खान शब्द मगराँतसँग सम्बन्धित देखिन्छ भने पर्सियन सभ्यतामा खान थर भएका व्यक्तिहरूको अस्तित्व पाइन्छ । उदाहरणको लागि भू.पू. प्रधानमन्त्री श्रीमती इन्दिरा गान्धीका पति फिरोज खान मुसलमान नभई पर्सियन वा आवेस्ताफारसी हुन् । त्यसबाट पनि खान थर मुसलमानी मौलिक थर होइन । फारसी भाषा, फारसी संस्कृतिलाई निकाली दिने हो भने मुसलमानी परम्परा नै लोप हुन्छ । त्यसकारण मुसलमानी परम्परागत मौलिकता नभएको हुनाले खान थर मुसलमानहरूले सिर्जना गरेको भन्दा नक्कल गरेको वा अपनाएको थर हो । नेपालमा मगरहरूमा खान थर भएका मानिसहरू इसापूर्वकालबाट हुनाले खान वा खाँण मगरहरूको मौलिक शब्द हो । यो कुनै वाह्य अनुकरण गरी लिएको होइन ।

शाह थरको उत्पत्ति विषयमा जुम्लातिर स-साना राजाले ठूला राजालाई कर तिर्नुपर्दा त्यस्तो करलाई शाहीकर भनिन्थ्यो । त्यो शाहीकरबाट पछि सयकर र शयकडा भन्ने शब्दको विकास भएको हो । त्यसैगरी जुम्लाजस्ता बाइसी क्षेत्रमा शीकारीचरो बाज छोप्ने परम्परा रहेको थियो ।

त्यसरी बाज छोप्दा ठूलो आकारको बाजलाई पाशोमा पार्न सकिए प्रशस्त आय हुने हुँदा बाजमा ठूलो भएबाट त्यस्तोलाई शाहीबाज भनिन्थ्यो । त्यसकारण शाह र शाही शब्द नेपालमा नौलो थिएन । राजाहरूले त्यो थर कुन आधारमा धारण गरे भन्ने कुराको नै खोजी गर्नुपर्ने हुँदा त्यसैको विचार गरिन्छ ।[८]

प्राचीनकालमा फारसदेश (पर्सिया: इरान, इराक, कुवेत) मा राजालाई शाह भनिन्थ्यो । तुर्कीस्थान, बेलोरेसिया, किर्गिस्थान, कजाकिस्थान तथा अफगानिस्थानका राजाहरूलाई पनि शाह नै भनिन्थ्यो । इस्लाम सम्प्रदायको उत्पत्ति हुनुभन्दा सयौं वर्ष पुरानो राजाको थर "शाह" हुने गर्थ्यो । माथि नै संकेत गरिसकिएको छ कि सर्वप्राचीन ग्रन्थ ऋग्वेदको संरचना मध्येशियामा भयो र तुर्की वृद्धहरूले त्यही ऋग्वेदमा प्रयुक्त भाषा आजतक बुझ्ने र बोल्ने गर्दछन् ।[९] उनीहरूलाई आफूले बोल्ने भाषा ऋग्वेदीय हो भन्ने ज्ञान पटक्क छैन । त्यताको समाजमा उत्तरकालमा भएका असंख्य आक्रमण, लूट, आतङ्क र हिंसात्मक घटनाहरूबाट त्यो ऋग्वेदीय परम्परा हराउँदै गएर पनि लवज, भाषा जनजिब्रो, शब्दावली जीवित रहेको हुनाले आजकल पत्ता लागेको हो । ऋग्वेदमा शासकलाई शाह भनिन्थ्यो र राजाधिराज पनि भनिन्थ्यो । जस्तै:-

"राजाधिराजाय प्रसह्य शाहिने
नमोवयं बैश्रणाय कुर्महे
समे कामान् काम कामाय मह्यम्
कामेश्वरो वैश्रवणे दधातु ।"

—ऋग्वेद

त्यसरी प्रचारमा आएको राजाधिराजलाई जनाउने शाही शब्द पछि परन्तुमा शाह भयो । त्यही शब्दलाई फारसी साम्राज्यकालमा राजाहरूले लिए, ग्रहण गरे । त्यही शब्द आर्यहरूले सप्तसिन्धु प्रदेशमा ल्याए । सप्तसिन्धुलाई फारसीहरूले हप्तहिन्दू भन्दा भन्दै हिन्दू भनिएको हो । त्यसैले हिन्दू स्थानको नाम हो धर्मको होइन र शाह आर्य ऋग्वेदको शब्द हो फारसी मुसलमानी मंगोल र इसाईहरूले स्थापना गरेको मौलिक शब्द नभई आर्य सनातनी वैदिक सभ्यताको प्रभावबाट आकृष्ट भई अरू समुदायमा प्रयोगमा ल्याएको हो । त्यसकारण शाही, शाहीकर, शाहीवाज, साई, खान, खवास्या, राजा, राजन्, राजाधिराज, शासक, गोसाई, रौतेला जस्ता थरहरू बिलकुल आर्य वैदिक संस्कृत र खस मगराँत शब्दहरू हुन् ।

त्यही शाही थरबाट ३६ खसहरू, १२ थरका पंथी मगरहरू १८ पंथीखामहरू (पछि गएर कहिएका) ४ पंथी, १६ पंथी गुरूङहरू, १० पंथी लिम्बूहरू, ८ पंथी राइहरू, १६ पंथी खुम्बुहरू र २७ पंथी ब्राह्मणहरूले साझा नेतालाई शाँई, राई, राया, रायाठौरा, ठिम्वरा, रायठिम्बरा, राउला, थरघर, कुलघर, शाँईदूवा, गोशाईं, राज्यपाल, पाल, सेवा चाँद, सिंहाशंनारूढं जस्ता विभिन्न थरहरूको विकास गरे । एघारौं शताब्दीमा राज्यको विकास भई कर्णाली प्रदेशमा साम्राज्यकेन्द्र बनाएका मल्ल, चल्ल, ल्ल, झल्ल, राजाहरूले आफूलाई राजाका सट्टामा राई, राइको आदेश, राइकर, राइका, रैका, जस्ता शब्द र पदहरूको प्रयोग गरेका थिए । त्यसबाट पनि शाही, शाह जस्ता शब्द कुनै मुसल्मानी र मंगोल मूलका नभई मौलिक हुन भनी विश्वास गर्ने आधारहरू पाइएका छन् ।[१०] राई शब्द शाहीको पूर्खा भएको कुरा ऐतिहासिक तथ्यबाट सिद्ध भएको छ । तसर्थ राई थरका मानिसहरू कुनैबेला शासक रही सकेका र राजकीय धर्म अङ्गीकार गरिसकेका भन्ने पनि आधार मिल्दछ । राया, रायठोर, राई, शाही र राइका शब्दको आपसी अन्तर्सम्बन्ध रहेको देखिन्छ ।

उपर्युक्त बुँदाहरूको अध्ययन गर्दा शाहवंश, खसवंश, मगरवंश र किरातवंशको प्रादूर्भाव मध्यएसियाबाट भएको हुनाले यी ३ वटा जातिबाटै वर्तमान नेपालको जग बसेको देखिन्छ । किनभने प्राचीनकालबाटै नेपाल एक भौगोलिक, सांस्कृतिक, धार्मिक, सामाजिक अभिव्यक्ति भई हिमालयसँग जोडिएको मुलुकको नाम हो र यहाँका वासिन्दा प्राचीनकालबाट यसको जगेर्ना गर्न समर्पित देखिन्छन् । नेपालमा खस, मगर र किरात गरी तीन जातिको बसोवास छ र त्यही जातिको शासन छ । ती तीन जातिको साझा नेतृत्व नेपालको शाहवंशीय राजघरानाले गरी आएको छ । यी तीनवटै जाति पहिले उत्पत्ति पनि एकै धरातलमा भएका र हालसम्म पनि एउटै धरातलमा एकच्छत्र बसोवास गरी आएका छन् । त्यसो

भन्नुको पछाडि एउटा गहिरो कारण छ । नेपालमा तीन जातिको एकमन भएन भने देश भाँडिन्छ, एकता खलबलिन्छ र पराईले यसको लाभ उठाउँछन् । यो कुरा पटकपटकका घटनाहरूले सिद्ध गरेका छन् । नेपालका राजघराना र बाइसी चौबिसी र सेन राजाहरूका पूर्खा कुनै राजपूतका सन्तति भएको वंशावली देखाउँछन् । त्यो इतिहाससम्मत नै मान्न सकिन्छ । तर राजपूतहरूको उत्पत्ति वेलो खोजी गर्दै जाँदा मगर र किरातहरूको उत्पत्ति क्षेत्रमा पुगिने हुनाले पछि ल्याइएको शासकीय, प्रशासकीय, राजकीय, सामन्ती परम्पराको भेद मात्र लाग्दछ मूलतः एकै रहेको पाइन्छ । त्यसैले वर्तमान नेपालका बासिन्दाहरूले आ-आफ्ना वंशावली र ऐतिहासिक नालिवेली खोजी गर्न पछि लाग्नुपर्ने ठानी सबैजसो नेपालीले आफ्नो वंशावली तयार पार्न कस्सिएका छन् । हामी पनि यसै सिलसिलामा शाहहरूको वंशबारे सानो अध्ययन गरिहालौं ।

कास्की अर्घौ निवासी महाशरम त्रिपाठीले लेखी तयार पारेको शाह राजाहरूको वंशावलीमा शाहहरूको उत्पत्तिका विषयमा मौन छ । भारतीय भूमिमा प्रवेश गरेपछि शाही राजाहरूका पूर्खाको वंशावली भनी प्राप्त पुस्तावलीमा उल्लिखित छ । प्राचीनकालमा भारत भूमिको उज्जयिनीनगरीको मारवाडदेश क्षिप्रानदीतटप्रदेशमा राजा विक्रमादित्य राना राजा थिए । त्यहाँपछि क्रमशः भोदित्यराना, मानसिंहराना, सुनादित्यराना, भार्गवराना, आदित्यरानाका, जयमल्लराना, पत्ताराना, महावीरराना र गांगु तिवारी चार जना मिली उज्जयिनी नगरीबाट चितौरगढमा पुरश्चरण गर्न गए । हिन्दू राजपूतसँग मुगलले कन्या दे या लडाईं दे भन्दा दोस्रो हाँक दिंदा चितौरगढमा मुसलमानी घेरा पर्‍यो । भाग्नु भन्दा मर्नु वेश भनी जैमलराना, पत्ताराना, गंगातिवारी र महावीरराना चारजनाले मतगरी मुसलमानसँग युद्धगर्दा मारिए । गांगुतिवारीका छोरा सैचन्द तिवारी जैमल् रानाका छोरा महासिंह राना शीकारमा गएका थिए । फर्कदा आफ्ना राज्यका योद्धा सवै मारिएको समाचार वाटैमा पाएकाले चितौरगढवाट धर्मरक्षार्थ पहाडतिर लागि रिडीतटमा आएर वस्न थाले । त्यही रिडीमा नै सैचन्द्र तिवारीले खाँडो जगाए, त्यसैबेला रिडीमा आकाशवाणी भएकोले नामजातलाई ओइघा लैजाँदा कार्कीकोटे राजाले बाटो छेके । त्यस बाधालाई छल्न सीतागुफामा बसे । केही दिनको अभ्यासपछि कार्कीकोटबाट पात टिप्न गएकी कार्की राज्यकी महिलाले अर्ति दिंदै कार्कीकोटे राजासँग बलले सकिन्न बरू यताका राजाकी रानी नहुँदा कार्की राजाकी छोरी राम्री छन् उनैलाई मागी विवाह गर्नु र त्यही आपसको प्रेमले काम सिद्ध हुने छ भनी अर्ति दिइन् । कार्कीको छोरीसँग नामजातको विवाह गरी ओइघा लसर्घाको घले मारी सो जमीनमा राज्य गर्न थाले ।[११]

कार्कीकी छोरीपट्टिबाट जन्मेका सन्तानले राजा हुन नपाउने भएपछि राजपूतकी छोरी विवाह गर्न भनी गोताम राज्यमा पुगे । गोतामका मल्ल राजाकी कन्या मागी उनितिरबाट रजपूत सन्तान देवशर्मा राई जन्मे । कार्कीकी कन्यापट्टिबाट पनि देवशर्माकै नाउ भएका पुत्र भएका थिए । कालक्रमले राजा नामजातको स्वर्ग भएकोले भलापाँच र सैचन्द्र तिवारीसहितका मानिस बसी राजपूत कन्यापट्टिका छोरालाई राजा कार्कीको कन्यापट्टिका छोरालाई काजी वनाई काजीको नाम नरेन्द्र र उनको थर अधिकारी र गोत्र भारद्वाज कायम गरिदिए । राजा देवशर्माको छोरा जिल्लराई उनका पनि अजिल्ल राई त्यसपछि क्रमशः थमदिल्ल राई, भूब्रह्म राई, तुथा राई, नरब्रह्म राई, विभिक राई, होजात् राई, भक्ति खान र मिचा भए । भक्तिखान र मिचा खान २ भाइले लिमीको बुर्थुमा आवाद गरी राज्य स्थापना गरे । त्यही जमीनमा सैचन्द तिवारीका नाति महाशर्मा तिवारीको विवाह भक्तिखान र मिचाखानले गरिदिए । भक्तिखानले नुवाकोटमा गादी वनाई बसे । उनका छोराहरू कनकवम्म र उनका सन्तति क्रमशः मणिराज, माणिवम, भूपति, विश्राम, त्रिलोक, वात्साह, नरनारायण, रूद्रशाह, इन्द्रभूपाल, मणिराज, माणिकराज, अरिदमनहरू नुवाकोटका राजा भएका थिए ।

मिचाखानका विचित्रखान, नरराजखान, जयतिखानका जेठाछोरा कालु, कान्छा जेसस्म भए । कालुलाई लमजुङमा चोरी राजा थाप्न लगेका बेलामा घलेले मारिदिए । त्यसपछि लमजुङबाट थरघर आएमात्र अर्को छोरा दिन्छु एकथर मात्रलाई दिन्न भन्दा सारू घिम्रया दुराहरू कास्की आई राजा माग्दा जसवम्मलाई लमजुङ लगी गादीमा वसाले । चैतु भन्नेलाई अर्घौमा वसालेका थिए । जगति खानका जलाल शाहीको चाँडै परलोक हुँदा तिनकी रानी सरूपावतीका गर्भ हुनाले अरिन्द्र अधिकारीका सन्तान भ्रांगल अधिकारी काजी थिए । त्यसैवेला चैतु शाही (अर्घौको राजा) ले सरूपावतीका

गर्भको होस नराखी भाउजु स्याहारी गादी लिउँ भन्दा जगतिखान जीवितै हुनाले आशा मात्र गरेर बसे । उनका मनमा पाप चिताएको थाहा पाई काजी झांगल अधिकारीले सरूपावतीलाई कहिं लुकाई संरक्षण दिए । त्यसरी आफ्नो राज्यमाथि षड्यन्त्र भएको चाल पाई चैतू शाहीले झांगल अधिकारीलाई अर्घौं झिकाई काटेका हुँदा सो ठाउँलाई झाँगलमारे वा झाँझरमारे भनिदै छ । झांगल सिंहका छोरा श्याम र मानिक अधिकारीहरू भागी सपरिवार मानिकका ज्यामरूक र श्यामका निभारचोक लमजुङमा बसे । उनीहरूले लमजुङको कज्याईं गरी बसे । उता कास्कीमा संरक्षण पाएकी सरूपावतीलाई झांगल काटिएपछि अन्यौल भयो । सरूपावती रानीको गर्भको विचार हुन नपाउँदै तल्लो अर्घौंमा बस्ने महाशरम् तिवारीले सरूपावती रानीलाई रातविरात गरी कास्की ल्याए । साहेबज्यू जन्मेपछि सिंदूरजात्रा भयो । उता चैतू शाहीले ब्राह्मणहरूप्रति पनि दगा गरे । राजा जगति खानले नातिलाई उत्तराधिकारी घोषणा गरिदिएपछि सरूपावती रानीले ती ब्राह्मण, अधिकारीहरूलाई मानुङ, तप्राङ, तेराथुम्, सिमलचौर, नुवागाउँ, चूयाबिसाउनु, देउराली, मोर्ज्याङकोट जस्ता ठाउँहरू विर्ता वितलब् गरिदिइन् । कुम्हालले बोकी लगेको हुँदा अर्घौंको किपटमा थिती बाँधी दिइन् । चैतू शाहीलाई अर्घौं झिकी मौजामा सारिदिइन् ।

नवराज राजशाहीले रजाईं पाएपछि उनका सन्तति क्रमश: नारायण शाही, नरेन्द्र शाही, नराज शाही, शिव शाही, जिल्ल शाही, प्रताप शाही, सिद्धिनारायण शाही, नरनारायण शाही भए । कास्कीबाट लमजुङ गएका पुस्ता जसवम्मका द्रव्यशाह, पूर्णशाही, रामशाही, डमरशाही, कृष्णशाही, रूद्रशाही, पृथ्वीपति शाही, वीरभद्रशाही, नरभूपाल शाही, पृथ्वीनारायण शाह, प्रतापसिंह शाह, रणबहादुर शाह, गीर्वाणयुद्धविक्रम शाह, राजेन्द्रविक्रम शाहसम्मको नामक्रम टिपेर राखिएको छ ।[१२]

### आठटीका शाह खलक:

शाहहरूको वंशावलीमा भूपालले उज्जैन छाडी रिडीमा आएपछि भीरकोटको खिलुङमा स्थायीरूपले बस्न थाले । उनका दुई छोरा हरिहरसिंह (खाँचा = जेठा) अजयसिंह (मिचा = कान्छा) नामले प्रसिद्ध भए । भूपालको निधनपछि जेठा हरिहरिसिंह (जैतखान= खाँचाखान) ढोर र भीरकोटमा बसी रजाईं गर्न लागे भने कान्छा अजयसिंह (मिचाखान) ले पल्लो नुवाकोटमा रजाईं गर्न थाले ।[१३]

(जैनखान) राजा हरिहरसिंह (खाँचा खान) ढोर र भीरकोटका राजा:[१४]

(१) सूर्यखान (भीरकोट राज्य) (१५०० वि.सं)
मेदिनीखान (१५२५ वि.सं.)
किनुखान (१५५० वि.सं.)
कृष्णखान र रूपाखान (१५७५वि.सं.)
सूर्यखान

(२) दशराथखान (गरहूँकोट राज्य ६०००)
जसखान (१५३७ वि.सं.)
उत्तिमखान (१५६० वि.सं.)
जामुनीखान (१५८५ वि.सं.)
महीपतिखान (१६००वि.सं.)

अनन्तखान (१६०० वि.सं.)
अर्जुनखान (१६२५ वि.सं.)
अनिरूद्धखान (१६५० वि.सं.)
श्रीनन्द खान (१६९० वि.सं.)
महेश्वरखान (१६९०-१७७५वि.सं.)
अनन्तखान (१८०९ वि.सं.)
वि.सं. १८२४ (ई. १७८८) ← इन्द्रभूपालखान
वि.सं. १८४२-४३-४८ ← (प्रेमअमर खान)
वि.सं. १८४९ ← हरिकृष्ण खान
प्रेमवश्वरखान

(३) कर्प्पखान ९१६१५० र दशरथ खान (ढोरराज्य २000)

| | |
|---|---|
| उच्यखान | कीर्तिखान |
| अजरखान | सुन्दरखान |
| जयन्त खान | वलिखान |
| अधरखान | विष्णुखान |
| जयन्तखान | नरेन्द्रखान |
| घुरखान | कृष्ण खान |
| गुप्तबहादुर खान | शिवनारायण |
| अरिभञ्जन खान (१८४२ वि.सं.) | किर्तिखान |
| | सुन्दरखान |

घुरखान → जिदल पूर्णचन्द्र

**अजयसिंह (मिञ्चाखान) नुवाकोटको राजाः**

| (४) भक्तिखान (१५१० वि.सं.) | (५) शिखुम्वखान (१५१० वि.सं.) (सतहूँ राज्य २०००) | (६) विचित्रखान (कास्की राज्य ८००० कुरिया) |
|---|---|---|
| कनकवम्मखान | ऐत्वम्मखान | कुरिया नराजखान |
| मणिराजखान | महीपतिखान | जगतिखान (कुलमण्डल) |
| माणिक शाही | चामुशाही | जलालशाही यशोवम |
| भूपति शाही | लेजुखान | राजशाही (लमजुङ ८००० कुरिया) |
| विश्राम शाही | तुलाशाही | शिउशाही |
| त्रैलोक्य शाही | बहादुर शाही | जिल्ल शाही |
| बाजशाही | क्षेत्र शाही | प्रताप शाही |
| नरनारायण शाही | पृथ्वीपति शाही | सिद्धिनारायण शाही |
| रूद्रशाही | दावानल शाही | नरनारायण शाही |
| इन्द्रभूपाल शाही | चानूशाही (१८०० वि.सं.) | |
| अरिमर्दन शाह (अरीदम्म १८४० वि.सं.) | दीर्घशाही (१८४३-५२ वि.सं.) | |
| श्रीभद्र शाही | टेकबहादुर शाही (तेगबहादुर शाही) | |

(७) यशोवम शाही (लमजुङ राज्यको स्थापना गर्ने पहिलो राजा)

| नरहरि शाह (१५९८वि.सं.) | (८) द्रव्यशाह (१६१६ वि.सं.) (गोरखा राज्य) | |
|---|---|---|
| चूडाशाही | पूर्णशाही | |
| जचिन्द्रशाही | छत्रशाही | रामशाही |
| नरेन्द्रशाही | | डम्बरशाही |
| केहरीनारायण शाही (१७३५वि.सं.) | | कृष्णशाही |
| भीमशाही | | रूद्रशाही |
| रिपुमर्दन शाही (१७९०-१८१५वि.सं.) | | पृथ्वीपतिशाही |
| वीरमर्दनशाही (१८१६-३९वि.सं.) | | बीरभद्रशाही |
| बीरभूपाल शाही | | नरभूपाल शाही |

## भीरकोट राज्यः

भीरकोट राज्यको नालिवेली खोज्दै जाँदा कालीगण्डकीको रिडीघाटदेखि पूर्वतर्फ बायाँ किनारमा रहेको वैघा भन्ने ठाडो डाँडामा लसर्घा भन्ने सानो वस्तीमा पुग्नुपर्ने हुन्छ । त्यसै ठाउँमा केहीकाल बस्ती बसी उत्तरतिर लागेर आँधिखोलादेखि पश्चिमतिरको खिलुङनामक क्षेत्र बाँफो र बस्न लायक ठानी रैतिसाथ जैनखानले बस्ती बसालेका थिए । पछि सो ठाउँबाट शीतल हावा लाग्ने भीरकोटमा गएर घरमन्दिर निर्माण गरी त्यही कोटघर रचना गरी स-सानो ठकुराइ (राज्य) चलाउन थालेका थिए ।[१५] त्यसरी भीरकोट राज्यको स्थापना विक्रमको १४७५ देखि १५०० सम्ममा भएको अनुमान गर्न सकिन्छ । यस्ता कुरालाई पुष्टी गर्ने केही

वंशावली जस्ता भूत्रा स्रोतका अतिरिक्त अरू अभिलेख्य सामग्रीहरू प्राप्त भएका छैनन् ।[१६] आठटीका राजवंशका पूर्वपुरुष पहिले भारतमा काहाँ थिए र कुन समयमा नेपाल पसे भन्ने प्रमाणित कुरा पनि थाहा पाउन गाह्रो परेको छ । नेपालका वंशावली र राजपुतानाका राजकूलमा चलेका अनुश्रुतिलाई लिई अनुकल्पना गरी लेखेका खेस्रा वंशावलीमा विश्वास गर्न बाध्य हुनुपरेको छ । चित्रविलासले लेखेको वंशावली गोरखासम्मको प्राचीन मानिएकोले त्यसको आधार पनि लिनुपर्ने भएको छ । वि.सं. १४९५ मा भूपालले रिडी पसेको वर्णन पाइएकोले प्रथम पुरुष उनैलाई मानिएको छ ।[१७] त्यो मिति पनि अनुमानित हुनाले प्रमाणले पुष्टी भएको पाइदैन । कालक्रमको विचार गर्दा भीरकोट राज्यको स्थापना जैनखानले नगरी उनको जेठा छोरा सूर्यखानले गरेको देखिन्छ ।

आँधीखोला र दह्रौखोलाको संगमदेखि दाहिने छेउबाट खिलुङ नामको पहाड उठेको छ । त्यसै ठाउँमा आँधीखोलाको वारपारका गाउँहरूलाई अधिन पारी भीरकोट राज्य स्थापना भएको देखिन्छ । तीनतीर भीरपरी टाप्पूमा समथर भाग भएकोले त्यस ठाउँलाई भीरकोट भनियो ।

**राजा सूर्यखान : (बि.सं. १५०० वि.सं.) (परिशिष्ट नं. १२)**

वर्तमान स्याङ्जा जिल्ला अन्तर्गत पर्ने चारकोट मध्ये (नुवाकोट, सतहूँ, गह्रौं र भीरकोट) को भीरकोट प्राचीन ऐतिहासिक कोट मानिन्छ । पहिले स्याङ्जामा पर्ने पैयूँकोट हाल पर्वत जिल्लामा पर्न गएको छ । राणाकालमा स्याङ्जालाई पश्चिम ४ नं. इलाका भनी चिनिन्थ्यो । स्याङ्जा अन्तर्गत पर्ने सर्दीखोला, सेतीखोला, बाडखोला, दरौं खोला, लुब्दीखोला, अर्मादीखोला, मिर्दीखोला, च्याङ्दीखोला, बाँगखोला, कराँदीखोला र फौदीखोला अनि स-साना खहरे पूर्वपश्चिमबाट आँधिखोलामा आएर मिसिन्छन् । त्यसकारण स्याङ्जाको मध्यकालीन सभ्यतालाई आँधीखोले सभ्यता पनि भनिन्छ । आँधीखोला लोकसंस्कृतिको भण्डार पनि मानिन्छ ।[१८] उत्तरमध्यकालको आरम्भमा राजा सूर्यखानले भीरकोटमा राज्यको स्थापना गरेका थिए । भीरकोटमा वरपर कोटाकोट, कारीकोट, वतासकोट, उमाकोट, बभाको, कूवाकोट, चापाकोट, धूर्कोट, दिसिङकोट, मिनाङकोट, मल्याङकोट, वलिकोट, गृहेकोट, पेलाकोट, सिर्सेकोट, बहाकोट, भापाकोट, सिंगारकोट, माभकोट, बूढाकोट आदि पर्दछन् । स्याङ्जा जिल्लामा उर्वर फाँटहरूले धनधान्य बनाएकोले यहाँ कहिल्यै अनिकाल पर्दैन जस्तै: चिलाउनेबाँस, रंगेठाँटी, लामागे, सतौं, भापाकोट, जोगीफाँट, लामाचौर, सिमलचौर, दार्सिङ, एक्लेपिप्पल, भारखाम, उमधेवा, सराखोला, वगुवा, डौवा, पकान, अमले, छवीसे, सुर्कौदी, खोजा, बाह्रविसे चापाकोट, न्वाघर, सर्केटारी, फूर्केटारी, त्रिवेणी आदिलाई फाँट या वेंशी भनिन्छ । त्यस्तै ज्याग्दीखोला भेकमा विरुवा, चिन्ने, गैह्री, खादीखोला, दार्सिङ, काम्ती, धूर्कोट वेंशी, टार जस्ता फाँट पनि कम उर्वर मानिदैनन् ।

स्याङ्जाका ठकुराईहरूमध्ये भीरकोट सबैभन्दा पुरानो भएको कुरा माथि पनि उल्लेख गरियो । विक्रमको पन्ध्रौंशदिको मध्यान्तरमा यसको स्थापना हुने पूर्वाधार तयार भइसकेको पाइन्छ । स्याङ्जामा प्रचलित लोकइतिहास अनुसार राजा सूर्यखानले आफ्नी इष्टदेवी आलमदेवी कुलदेवीको स्थापना गरी लसर्घामा चौपाट्टी भैं निर्माण गरी भीमसेनपाते (धूर्सेलीको) सिम्हारा बिरूवा लगाएका थिए । ती आलमदेवीले चितौरगढमा महाराजालाई "मलाई जमीनमा नछुवाई उत्तर खण्ड नेपाल देशतिर लैजाउ र राज्य गर" भनिन् । तद्नुसार रिडिघाटमा पुगेपछि प्यास लागेकोले बाटाका घरमा पानी मागे । त्यस घरमा रक्सी बनाएकोले रक्सीको घ्याम्पामाथि राखेको तातो पानी खाएँछन् । राती सपनामा "तातो पानी पिउनेले अबदेखि मलाई नछुनु, तर पूजा गर्न नछोड्नु" भनेकीले कारीकोटमा आए । ती जनै नलगाउने तातोपानी खाने भाइलाई मगर र नखाने भाइलाई ठाकुर भनियो । ती कुलदेवीलाई लसर्घामा स्थापना गरी ब्राह्मणको वाक्य, ठकुरीकर्ता, मगर पुजारी भए ।[१९]

आलमदेवीलाई भीमसेनपातीको बोटमा राख्न खोज्दा अचानक हातबाट देवी जमीनमा खसिन् र भटपट समात्न खोज्दा देवी अलप भएकीले राजा सूर्यखानलाई अत्यन्तै चिन्ता पर्न गयो । रातमा राजालाई "पिर मान्नु पर्दैन, म यही बस्दछु चोखीनीतिसँग मगर कुमार केटा ४, पण्डित १, राजाकर्ता १ भई मेरो भक्ति गर्नु र राज्य बढला" भनी सपना वाणि भयो ।

जागा भएपछि राजाले त्यसै ठाउँमा चौपाटी (चौतारी = चौडिलो) बनाए । देवी अलप भएको ठाउँलाई अलपदेवी भन्दा भन्दै आलमदेवी हुन गयो ।[२०] आलमदेवीलाई वंशावलीमा आलम खडका कालिका भनिएको छ ।[२१] राजा सूर्यखानका विषयमा अन्य जानकारी पाउन सकिएको छैन ।

**मेदिनीखान: (वि.सं. १५२५)**

भीरकोट राज्यको इतिहासमा मेदिनीखानले राज्यको सिमाना बढाएको लोकइतिहास सुन्न पाइन्छ । तर त्यो भूभाग कहाँदेखि कहाँसम्म हो भनी जानकारी पाउन भने सकिएको छैन । राजा जैनखानले आँधिखोलाका पुछारको बैघा लसर्घा आई कुलेदवीलाई सामान्य स्थापना गरेका र बसोबास रचाएका भन्ने स्याङ्जातिर किंवदन्ती र जनश्रुतिमूलक वर्णन सुन्न पाइन्छ । त्यही खान परिवारले क्रमश: आफ्नो शक्ति र स्रोत आर्जन गरी उत्तरपूर्वतिर पाइला सार्दै काली गण्डकीदेखि पूर्वउत्तर र सेती गण्डकीदेखि दक्षिणपश्चिमका भूभागलाई एकीकृत गरी एउटा नयाँ खानठकुराई (राज्य) स्थापना गरेका थिए । तर बैघा लसर्घा तीनतिरबाट कालीगण्डकीले घेरिएको अग्लो सुख्खा डाँडोमात्र भएकोले र छेउपट्टि परेकोले खिलुङलाई मध्यभाग ठानी सूर्यखानले भीरकोट दखल गरेका कुरा माथि नै उल्लेख गरिएको छ । तसर्थ भीरकोटको पूर्व तनहूँ, पश्चिमतिर पाल्पा, उत्तरतिर कास्की र दक्षिणतिर पाल्पा, गुल्मी पर्दथे । पाल्पाली राजाले भीरकोटको सरहद नाघी तनहूँ राज्यको स्थापना गरेका थिए । त्यसरी विचार गर्दा भीरकोट राज्य महत्त्वपूर्ण ठाउँमा रहेको बुझिन्छ । त्यसकारण आफ्ना बाबु सूर्यखानले इष्टदेवी आलमदेवीको स्थापना, पूजा बन्दोबत मिलाई राज्यमा धार्मिक स्थीरता ल्याएका हुनाले मेदिनी खानलाई भूभाग विस्तार गर्ने पक्षमा लाग्ने अवसर मिल्यो । त्यसका साथै राजा सूर्यखानका भाइ दशरथ खानले वि.सं. १५१० तिर राज्य स्थापना गरिसकेका हुनाले पनि भीरकोट राज्यलाई समृद्ध बनाउने प्रयत्न गर्नु अनिवार्य जस्तै भएको थियो । भीरकोटबाटै वर्तमान नेपालको राजतन्त्रको पूर्वाधार रहेकोले राजा मेदिनीखानले खिलुङपूर्वको जगतपुरमा आफ्नो सुरक्षा हुने ठानी राजधानी घोषणा गरेका थिए । त्यो ठाउँ नेपालको एकीकरणतक कायमै रहेको थियो ।

**राजा किनुखान: (वि.सं. १५५० अनुमानित)**

भीरकोटका राजा किनुखान मेदिनीखानका जेठा छोरा हुँदा आफ्नो पुस्तैनी राज्यका राजा भए । उनका छोरा सूर्यखानको सानै उमेरमा मृत्यु भएको र अरू पुरुष सन्तान नभएकाले राजा किनुखानका भाइ वा राजा मेदिनीखानका कान्छा छोरा रूपाखानले भीरकोट राज्य पाएको कुरा आठटीका शाह वंशावलीबाट खुल्न गएको छ । राजा किनुखानले आफ्नो राज्यलाई धनधान्य समृद्ध पार्ने उद्देश्यले जलखेती विस्तार गर्नका निम्ति खोलाहरूमा बाँध बनाई कुला र नहरहरू निर्माण गर्न लगाएको कुरा स्थलगत सर्भेक्षणबाट जानकारी हुन्छ । हाल ती पुराना कुला र नहरहरूमा कुनै अभिलेख नहुँदा ती निर्माण गरिएका निश्चित तिथिमितिको ज्ञान हुनपाएको छैन । त्यसो हुँदा स्थानीय मौखिक स्रोतको भरले लिखित आश्रय लिनुपर्ने भएको छ ।

**राजा रूपाखान: (वि.सं. १५७५)**

राजा रूपाखान किनुखानका कान्छा छोरा भएर पनि आफ्ना दाजु कृष्णखान र भतिज सूर्यखानको निसन्तान अवस्थामा मृत्यु भएबाट भीरकोटको राज्य गर्ने अवसर पाएका थिए । रूपाखान भीरकोटको राजा भएपछि आफ्नो राज्यका विभिन्न ठाउँमा पुग्न सुविधा होस् भनी गाउँलाई जोड्ने बाटो खनी सिंढी छाप्न लगाएका कुरा स्थानीय ज्ञानवृद्धहरूबाट सुनिँदै आएको छ । उनले भीरकोटजस्थलमा बटुक भैरवको स्थापना गराई कनफट्टा जोगीहरूलाई पुजारी राखी गुठी भोग लगाए ।

**राजा अनन्तखान II (वि.सं. १८०९)**

भीरकोटका राजा रूपाखानपछिका अनन्तखान I देखि क्रमश: अर्जुनखान, अनिरूद्धखान, श्रीनन्दखान र महेश्वरखानसम्मका राजाहरूका नाम वंशावलीमा पाइन्छ तापनि उनीहरूका वर्णन तथा ऐतिहासिक कार्यहरू र अभिलेखहरू प्राप्त नभएबाट यसै भन्न सकिने स्थिति रहेन ।

राजा अनन्तखान II का बारेमा केही कुरा प्राप्त भएकाले त्यही आडमा यहाँ वर्णन गरिन्छ ।

वि.सं. १८०९ आषाढ २ गते आइतवारका दिन श्री ५ वडामहाराजाधिराज पृथ्वीनारायण शाहले नुवाकोटबाट महोद्दामकीर्ति शाह, रूद्र शाह, काजी कालु पाँडेहरूलाई गोरखादेखि पश्चिमतर्फका राज्यहरूसँग सन्धि-बिग्रहका काममा भर परी पत्र लेखेका थिए । उक्त पत्रमा पृथ्वीनारायण शाह स्वयम् पूर्वतिरको स्थिति बुझ्न लागेकोले पश्चिमतिरका कुरालाई उनीहरूको जिम्मा दिई लमजुङ तनहूँजस्ता चौबीसे राज्यहरूले गोरखा विरुद्ध आक्रमण नगरून् भनी त्यस्तो नीतिमा लाग्नु परेको थियो । त्यस कामका निम्ति पर्वत कास्की, पाल्पा, भीरकोट आदि राज्यलाई हात लिनका निम्ति श्री ५ पृथ्वीनारायण शाहले कूटनीतिपूर्वक जोड दिई पत्र लेखेका थिए । सो पत्रमा "पाल्पासित पनि बहुतै मीठो गर, पाल्पासित बलियो गाँठीपार कास्की भीर्कोटछेउ पनि मानिस पठाव" जस्ता कुरामा जोड दिइएको छ ।[२२] उक्त पत्रमा चौबिसी क्षेत्रका राजाहरूका नाउँ उल्लेख नभएपनि कालक्रम विचार गरी भीरकोटमा अनन्तखान II राजा भएको मानिएको छ ।

राजा अनन्तखानका बाबु महेश्वरखानका राज्यकालमा वि.सं. १७०५ मा पैयूँ भीरकोटको बीचमा युद्ध भयो । त्यसको कारणमा पैयूँकोटे राजा संग्रामसिंह सेनले भीरकोटका राजा महेश्वरखानकी छोरीसँग (नाउँ थाहा पाउन सकिएको छैन) विवाह गरेका थिए । ठकुरीहरूले प्राय: आफ्नी पत्नीले तयार पारेको भान्छामा खाँदैनथे । भीरकोटेखान ठकुरी राजाहरू आफूलाई चोखा ठकुरी मान्ने हुनाले आफ्नी छोरीले पकाएको खाना ज्वाँइले खाने छन् ठान्दथे । तर पैयूँका राजाले पत्नीले छोएको खाएनन् । त्यही तूष लिएका भीरकोटे राजाले अर्कै निहूँ पारी पाखापानी भन्ने ठाउँका पैयूराज्यभित्रका गाउँलेहरूका घर लुट्न लगाए । युद्धको तयारीमा नरहेको पैयूँमाथि लुटेकाले पैयूँले पनि कडा प्रतिकार गरेको थियो ।[२३] पैयूँको सेनामा काफ्ले थर भएका लडाकूहरू झराले सेना भई भीरकोटेलाई हराइदिंदा भीरकोट र गह्रौंकोटे राजाहरूले काफ्लेको पानी बारेका कुरा पनि स्थानीय स्रोतबाट जानकारी हुन आएको छ ।[२४] राजा अनन्तखान II को राज्यकालमा पनि पैयूँको सम्बन्ध राम्रो देखिन्न ।

**राजा इन्द्रभूपाल खान: (१८२४ - १८४९ वि.सं.)**

राजा इन्द्रभूपाल खाँन भीरकोटका अन्तिम राजा हुन् । वि.सं. १८२४ फाल्गुन ११ गते शुक्रवार गोरखाका श्री ५ पृथ्वीनारायण शाहले नुवाकोटबाट एउटा पत्र प्रसार गरेका छन् जुन भीरकोटे राजा र त्यहाँको चौतरियालाई लक्ष्य गरी लेखिएको भन्ने देखिन्छ । श्री ५ पृथ्वीनारायण शाहले त्यो पत्र कालु पाँडेलाई लेखेका र त्यसमा भीरकोटे राजालाई एउटा बाज, त्यहींका चौतरियालाई १ हात्ति र रू. १०००/- मित्रताको आधारमा दिने कबूल गरेकोमा त्यसपटक ती कुराहरू पठाइएको भन्ने लेखिएको छ । त्यसबाट भीरकोट र गोरखाको बीचमा आँतिलो मित्रता रहेको कुरा स्पष्ट बुझिन्छ । तनहूँ राज्यले गोरखामाथि ढाडेहानी आक्रमण गरेमा भीरकोटबाट तनहूँमा आक्रमण गराउने दाउ श्री ५ पृथ्वीनारायण शाहले राखेको कुरा पनि थाहा हुन्छ ।[२५] यसकारण भीरकोट राज्यले चौबिसी समूहमा महत्त्वको भूमिका खेलेको पाइन्छ ।

श्री ५ पृथ्वीनारायण शाहले उपत्यका विजय गरेपछि केही चौबिसी राज्यसँग सम्बन्ध बढाई पश्चिम विजय गर्ने योजना गर्न लागे । त्यस काममा उनले आफ्ना भाइहरूलाई नपठाई वंशराज पाँडे तथा केहरसिंह बस्न्यातलाई ६ कम्पनी (६००) तालिमे र २ कम्पनी काँचा सैनिक दिई पश्चिमतिर विदा गरे । केहरसिंह बस्न्यात तनहूँतिरको बाटो गएर त्यहाँको सेनालाई पनि आफ्नो साथमा लगे । बैशाख १८२७ मा रिसिङका राजाले पनि नेपालको आश्रय स्वीकार गरे । भीरकोटका राजा इन्द्रभुपाल खानले नेपालको आश्रयमा आउन नमान्दा आषाढ लाग्दाताका केहरसिंह बस्न्यातले आक्रमण गरे । गृहाकोटको युद्धभूमिमा भीरकोटे राजाको हार भएकोले पर्वततिर पलायन गरे ।[२६] अर्कोदिन गह्रौं र पैयूँका राजाले पनि पलायन गरे । गृहाकोटको युद्धमा तनहूँका सैनिकहरूलाई शत्रुसँग मिलेको आरोप लगाएर नेपालीद्वारा काटिए । त्यसबाट तनहूँका राजा हरकुमारदत्त सेन रिसले मुरमुरिएका थिए ।

पर्वतका राजाले वर्षात् बितेपछि चौबिसी क्षेत्रमा घुस्न आएको नेपाली सेनालाई वि.सं. १८२८ पौष ५ गते २०००

जति सेनाले आक्रमण गर्दा ५०० नेपाली मारिई केहरसिंह बस्न्यातसमेत परे भने वंशराज पाँडेलाई पक्री पर्वत पुऱ्याएपछि बचेका नेपाली सेना तितर बितर भएर ढोर पसे । श्री ५ पृथ्वीले धोकलसिंह बस्न्यातसाथ ठूलै सेना पठाउँदा हार हुन गई फर्कन बाध्य भएका थिए ।[२७] (परिशिष्ठ नं. १३,१४)

नेपालका नायब बहादुर शाहले कालीगण्डकी पूर्वतर्फका चौबिसी राजाहरूलाई आश्रय माग्ने आग्रह र सन्देश पठाएका थिए । तदनुसार नुवाकोट ढोर गरहूँ र पैयूँका राजाहरूले आश्रय स्वीकार्न नमानी पर्वततिरको समूहमा लागे भने कास्की तनहूँ, नुवाकोट र रिसिङ नेपालमा मिलाइए । सतहुँका राजा भूपनारायण शाह, भीरकोटका राजा चक्रपतिखान र रिसिङका राजा वेणिप्रसाद सेन नेपालका मित्रहरू भएको परिस्थिति थियो । ती राजाहरूलाई लिएर अभिमान सिंह बस्न्यात काठमाडौं पुगेका थिए । वि.सं. १८४२ को माघ महिनामा नायब बहादुर शाहले पाल्पाका राजा महादत्त सेनकी छोरी विद्यावतीसँग विवाहसाथ "एकानी शत्रु एकानी मित्रु" को गोप्य सन्धि गरेका थिए ।

वि.सं. १८४९ पौषवदी ९ रोज ६ मा श्री ५ रणबहादुर शाहले भीरकोटे राजा इन्द्रभूपाल खानलाई खारेज गरी हरिकृष्ण खानलाई राज्य प्रदान गरेर लालमोहर दिएका थिए । सो लालमोहरमा इन्द्रभूपाल खानले नेपालका श्री ५ को हुकुममा नचली खोसिएको र हरिकृष्ण र उनका सन्तानले नेपालको भलो गरून्ज्याल नखोस्ने भनी ताम्रपत्र गराउन लगाएका कुरा थाहा हुन्छ । त्यो ताम्रपत्र दिंदा श्री ५ रणबहादुर शाहको मुकाम कान्तिपुर भएको कुरा पत्रको पुछारको व्यहोराबाट खुलेको छ ।[२८] त्यसरी राज्य खोसुवा गर्नुपर्ने कस्तो अपराध इन्द्रभूपाल खानले गरेका थिए त भन्ने कुरा पनि खोजी गर्नुपर्ने भएको छ । नेपालका नायब बहादुर शाहले आफ्नो आश्रयमा आएका राज्यहरूलाई थमौती गरी उनीहरूप्रति राम्रो व्यवहार गर्ने नीति लिएका थिए । तद्नुसार भीरकोटका राजालाई थप सहुलियत स्वरूप जहारी भन्ने क्षेत्र प्रदान गरिएको थियो । भीरकोटको राज्यलाई जहारी र सतहूँलाई दार्मा प्रदान गरिएको थियो ।[२९]

वि.सं. १८४२ मा भीरेकोटे राजा इन्द्रभूपाल खानले नेपाल विरुद्ध विद्रोह गरेका थिए । नेपालको एकीकरण अभियान भीरेकोटे राजालाई चित्त नबुझेको र आफूलाई नेपालले त्यति धेरै महत्त्व नदिएको महसुस गरी बागीहरूको नेतृत्व गरी विद्रोह मच्चाए । त्यसबेला नायब मुमा राजेन्द्रलक्ष्मीले ती राज्यहरूसँग सम्बन्ध सुमधुर बनाउन पनि सफल नभएको देखिन्छ । तर राजेन्द्रलक्ष्मीको मृत्यु वि.सं. १८४२ श्रावण २ गते भएकोले नायब बहादुर शाह शक्तिमा आएपछि भीरेकोटको विद्रोहलाई साम्य पारेको बुझिन्छ । साथै भीरेकोटे राजालाई प्रशस्त सहुलियत दिई सन्तुष्ट पारेको बुझिन्छ ।

भीरकोटे राजा इन्द्रभूपाल खानपछि हरिकृष्ण खानलाई त्यहाँको जिम्मा दिइएको कुरा माथि पनि उल्लेख गरिसकिएको छ । स्वतन्त्र भीरकोटका राजा अन्तिमकालतक इन्द्रभूपाल नै रहेका थिए भने त्यसपछि नेपालको संप्रभू भीरकोटमा लागू भएको बुझिन्छ । राजा हरिकृष्ण खानपछि क्रमशः पृथ्वी भूपाल खान, पृयम्वरखान, ललितबहादुर खान, ताम्रध्वज खान, राजा तारकबहादुर शाह र ऋषिकेश शाह रहेका कुरा जानकारी भएको छ ।[३०] अंग्रेज इतिहासकारले भीरकोट राज्यका प्रभावमा गह्रौं, पैयूँ र नुवाकोट जस्ता राज्यहरू रहेको कुरा उल्लेख गरेका छन् ।[३१] (परिशिष्ठ नं. १५)

वि.सं. १९९६ चैत्रमा भीरकोट दर्भूङ नौलाबडामौजाकी श्रीकालीका गुठी लगत किटान १८६४ सालसँग नमिलेकोले जाँच गरी ठीक लगत खडा गर्ने निर्देशन श्री ३ जुद्धबाट भएको छ । त्यस्तै वि.सं. २००० सालमा श्री ३ जुद्धबाटै भीरकोट साँखर निवासी अम्बरप्रकाश शाहलाई पेटिया भत्ता भनी रू. २७२।५९ थमौतीपत्र प्रकाशमा आएको छ । (परिशिष्ठ नं.१६) वि.सं. १८८७ मा भीरकोटे रजस्थलमा स्थापित बटुक भैरवको गुठीलाई वि.सं. १८८५ मा थमौती गरिएको छ । (परिशिष्ठ नं.१३/१४) भीरकोटमा बटुक भैरवको स्थापना राजा रूपाखानले वि.सं. १५७५ ताका गरेको कुरा उक्त मन्दिरका पूजारीबाट जानकारी हुन आएको छ । नेपालको एकीकरण हुँदा नुवाकोट, सतहूँ, भीरकोट र रिसिङ माथि विजय गरी ती राज्यका राजाहरूलाई अभिमानसिंह बस्न्यातले साथ लिई काठमाडौं पुगे । (पूर्णिमा २०, २०२५ माघ-चैत्र, पृ. ३२६)

### गरहूँकोट राज्य

आँधीखोला क्षेत्रको आठटीका शाह खानदानको दोस्रो राज्यको नाउँ गह्रौंकोट हो । टाकटुक ६००० घरकुरिया भई त्यति नै सैनिक वलशाली गह्रौंराज्य भूभागका दृष्टिले त्यति विधि सम्पन्न मानिदैनथ्यो । वि.सं. १५१० मा राजा दशरथ खानद्वारा स्थापित गह्रौं राज्य आँधीखोलाबाट दक्षिण पश्चिम टूँडो पर्दै गएर लसर्घा हुँदै रिडीसम्म पुगी कालीगण्डकीमा गएर जोडिएको र आकारमा ताप्के जस्तो परेको थियो । यो राज्यको पूर्वपट्टि नुवाकोट पश्चिमपट्टि गुल्मी उत्तरमा पैयूँ तथा सतहूँ दक्षिणमा भीरकोट राज्यहरू पर्दथे र ती राज्यहरूको सिमाना अदलीबदली भइ नै रहन्थ्यो ।[३२] यसै राज्य अन्तर्गत पवित्र ढोरवराह क्षेत्र पर्दथ्यो र पछि ढोरमा पर्‍यो ।

### राजा दशरथ खान (वि.सं. १५१०) :

राजा दशरथ खान गरहूँ राज्यका संस्थापक हुनाले आफ्नो सुरक्षा र शासन सञ्चालन गर्ने अनुकूल ठाउँ खोजी गर्नुपर्ने हुन्थ्यो । तसर्थ उनले सबै कुरा विचार गरी भूँमरेलाई सर्वप्रथम रजस्थल वा राजमुकाम घोषण गरेका थिए । भीरकोटबाट पृथक् भएकोले गह्रौं राज्यले भीरकोटे राजालाई प्रत्यक्ष मान्यता गर्दथ्यो । मध्यकालीन गण्डकी प्रश्रवण क्षेत्रमा स्वतन्त्र राज्यहरू खोलापिच्छे हुनसक्ने परिस्थितिको सिर्जना भइरहेको थियो । दक्षिणतिरबाट आएका भएर होला गह्रौंको भूँमरे र बालिङ वरपर उखूँ खेती गरी उखूँको खूदो, गुँड, भेली, सर्वत पानी बनाई फागुनबाट जेष्ठसम्म बाटाघाटामा धर्मपानी राख्ने र अक्षयतृतीयामा जौको सातुसामल वितरण गर्ने परम्परा पनि राजा दशरथ खानले त्यस क्षेत्रमा आरम्भ गरेका थिए । त्यसका साथै आफ्नो राज्य अन्तर्गत पर्ने कुलदेवता आलमदेवीस्थान लसर्घामा हरेक वडादशैं र चैतेदशैंमा उपासु, वलि, पूजा र वलि अर्पण गर्ने खर्चको वन्दोबस्त पनि उनैले मिलाई दिएका थिए । राजा दशरथ खानले राज्यलाई धन धान्यपूर्ण पार्नका निम्ति आँधीखोलो र अरू स-साना खोलाहरूमा ठाउँ हेरी वाँध, पर्खाल, ठेलहाली कुलो काट्न लगाई छेउछाउका टार र बगरलाई सिंचित गर्ने योजना वनाएका थिए । जति बढी जमीन आवादी गर्न सकियो त्यति नै राज्यको आय बढ्ने हुनाले राजाले आफ्ना रैतिप्रजाप्राणीलाई जमीन आवाद गर्नमा प्रवृत्त गर्दथे । त्यसपछि स-साना उद्योग इलम र उत्पादनमा जनतालाई लगाउन थाले ।

### राजा जस (राज) खान (वि.सं. १५३७)

गह्रौं राज्यको पश्चिमी सिमाना गुल्मी चारपालासँग जोडिन गएकोले त्यससँग वैवाहिक सम्बन्ध कायम रहेको थियो । गुल्मी चारपाला राज्यको स्थापना वि.सं. १४९३ मा राजा बीर शाहबाट भएको थियो । राजा बीरशाहले गुल्मी रेसुङ्गा गौविर्ताको ताम्रपत्र गराई दिएका थिए । उनका सन्तान रूद्र शाह गह्रौंका राजा जसखानसँग वैवाहिक सम्बन्ध गराएका थिए । त्यसरी वैवाहिक सम्बन्ध भएपछि गुल्मीको अनुकरण गरी लसर्घाको धुरीलाई गौचरन राख्ने घोषणा गरेका थिए ।[३३]

राजा जसराज खानले आफ्नो कुलदेवता आलमदेवीमा खड्गसिद्धि गर्न आफ्ना मावली खलकलाई उमराव पद प्रदान गरी खान्गीको बन्दोबस्त गरिदिएका कुरा लसर्घाका सारूमगर वृद्धहरूबाट जानकारी भएको छ । राजा जसराज खानले आफ्ना पूर्खाले स्थापना गरेको खिलुङ कालीकामा पूजा पठाउने परम्परा कायमै राखेका थिए । त्यहाँ नित्य नैमित्यिक पूजा सञ्चालनका निम्ति पहिलेको मगर राज्यको राजधानी रहेको झारखाम क्षेत्रको ४०० मुरी खेतलाई पूजा गुठीमा परिणत गर्न विशेष भूमिका खेलेका थिए । वडादशैंका नवरात्री र चैतेदशैंका सप्तमीदेखि पूजा गरिने खिलुङ भगवतीका पूजारीमा मगरहरूलाई थमौती गरियो । तत्कालीन परिस्थिति विचार गरी खिलुङ कालीकाको फूलपाती लगी देवीस्थान भीरकोटमा पूजा गरिने परम्परा अनुसार त्यहाँबाट दभ्रूङकोटमा पूजा चलाउने दभ्रुङकोटको पनि फूलपाती लगी बूढाकोटमा पूजा गर्ने र बूढाकोट फूलपाती लगी भूमरे तथा गह्रौं कालीकाको पूजा सञ्चालन गर्ने घुम्ती पूजा परम्परा चलाएका थिए । आजकल पनि केही न केही रूपमा त्यो परम्परा कायम रहेको बुझिन्छ । साथै राजा जसराज खानले आलमदेवी लसर्घाको पूजाआजामा बजाउने बाजाहरू कर्नाल र ट्याम्को, खड्ग र तरवार अर्पण गरेका थिए । नेपालको एकीकरणसम्म

उनले अर्पण गरेका बाजाहरूको प्रयोग गरिन्थ्यो । नेपालको एकीकरणपछि श्री ५ रणबहादुर शाहको राज्यकालमा आलमदेवी लसर्घामा प्राचीन बाजा साना र पुराना भई नयाँ ठूला वनाउनु उपयुक्त ठानी सुधार गरेको देखिन्छ ।(परिशिष्ठ नं. १७) परम्पराअनुसार ती बाजाहरू गह्रौंकोटे राजाको संरक्षणमा र नेपालको एकीकरण पछिसम्म पनि गह्रौंकोटे राजाका सन्ततिहरूको रेखदेख तथा जिम्मा दिने परम्पराबाट स्पष्ट रूपमा बुझ्न सकिन्छ । वर्तमानकालमा पनि आलमदेवी बेगमाताका गरगहना र बाजागाजाहरू गह्रौंकोटे राजाका सन्ततिहरू कहाँ भण्डारन गरिदै आएको छ ।[३४]

## राजा उत्तिमराज खान (वि.सं. १५६०):

स्याङ्जामा प्रचलित लोकपरम्परागत इतिहास अनुसार राजा उत्तिमराज खानले आफ्नो राज्यलाई विस्तार गरी पूर्वमा चापाकोटफाँट, पश्चिममा कारीकोट, रिडीघाट, उत्तरमा पिंढीखोला पैयूँसम्म ठोक्किन पुगेको र दक्षिणमा कालीगण्डकीसम्म पुऱ्याएका थिए । परम्परादेखि गह्रौंकोटे राजाहरूले लगाएका भुमरेको राजमुकामलाई पनि विस्तार गरी नयाँ राजमुकाम कायम गरेका थिए । त्यसलाई आजकल पुतलीखेत भन्ने नामकरण गरिएको छ ।

राजा उत्तिमराजले आफ्नो राज्यअन्तर्गत स्वरेक भन्ने ठाउँमा कालीकाको स्थापना गरी त्यहाँ नित्यनैमित्यिक र पार्विक पूजा गर्ने बन्दोबस्त मिलाएका थिए । त्यसै कालीका मन्दिर परिसरमा भैरवको स्थापना गरी त्यहाँ पनि पूजा चलाउने वन्दोवस्त मिलाएका थिए । पछि कालीदेवी र भैरवको सँगै पूजा गर्ने परम्परा रहेकोले ती देवतालाई काली भैरव भनी पुकारिन थाल्यो । नेपालको एकीकरणपछि त्यस ठाउँका काली भैरव गुठीलाई राजगुठीमा परिणत गरिएको थियो । राणाकालमा त्यसै गुठीमा मुद्दा पर्दा जयन्त खान ठकुरीका नाउमा सो गुठी भोग गर्ने फैसला भएको देखिन्छ । (परिशिष्ठ नं. १२)

राजा उत्तिमराज खानका समकालीन चौबिसी राजाहरूमा प्यूठानको भित्रीकोट राजधानी गराई लटराजले वि.सं १५६० मा राज्य स्थापना गरेका थिए ।३५ त्यसैगरी पाल्पा राज्यको स्थापना रत्न सेन र पर्वत राज्यको स्थापना डिम्बराज (दिलीपवम मल्ल) ले गर्दै थिए ।३६ पर्वतमा राजा डिम्बराज पछि नागमल्ल त्यहाँको राजगद्दीमा बसीसकेका कुरा थाहा हुन्छ ।

राजा उत्तिमराज खानले आलमदेवीको हवन र धूपका निम्ति कैली गाईको नौनी घिउ प्रयोग गर्ने परम्परा बसालेको हुनाले आजकल त्यहाँ पूजा चलाउने दिनमा नौनीघिउको डंगूर लाग्दछ । भाकलपूजा गर्नेहरूको सामग्री नियमित दरवन्दीको पूजा सामग्रीसँग मिसाउने चलन छैन ।

## राजा जामुनी खान (वि.सं. १५८५) :

राजा जामुनी खानको राज्यकालमा भीरकोटका राजा रूपाखानका बीच राज्य सिमानाको कुरालाई लिएर युद्ध भएको थियो । मिर्दी खोलाको किनारमा भएको सो युद्धमा गह्रौं राज्यको विजय भएको थियो । गह्रौंलाई मद्दत गर्न रिडीघाट तरी कार्कीकोट हुँदै गुल्मी चारपालाको सैन्य आएको थियो । त्यसबाट गह्रौं तथा गुल्मीको आन्तरिक सम्बन्ध घनिष्ट रहेको पुष्टि हुन्छ । त्यो सम्बन्ध पछिसम्म कायम रहेको देखिन्छ ।[३७] अर्कोकुरा भीरकोट राज्यलाई वरपरका राज्यले मान्यता गरेका कारणले सिमाना अतिक्रमण गर्न खोजेकोले युद्ध भएको बुझिन्छ र गह्रौं राज्यले छिमेकी शक्तिबाट मद्दत लिई आफ्नो स्थिति दह्रो बनाएको थियो । गह्रौं राज्यको र भीरकोटको परम्परागत सीमाना मिर्दीखोला नै कायम हुन गएको थियो ।

## राजा महिपति खान (वि.सं. १६००):

राजा महिपति खानको राज्यकालमा गह्रौं राज्य फूटेर ढोर राज्यको स्थापना भएको थियो । महिपति खानका जेठा छोरा कर्णखान गह्रौंका राजा भए भने उनका भाई दशरथ खानले ढोर राज्यमा आफ्नो स्वतन्त्र राज्यको स्थापना गरेका थिए । राजा महिपति खानका राज्यकालमा भएका घटनाहरूको विवरण पाउन सकिएको छैन ।

## राजा कर्णखान (वि.सं. १६१५):

राजा कर्णखानका भाइ दशरथ खानले कास्कीबाट बगेको सेती नदीका तटमा ढोरफिर्दी भन्ने क्षेत्रमा एउटा ठकुराइको जगेर्ना गर्दा बाबु महिपति खान र दाजुको पनि मद्दत पाएका थिए । रिसिङ घिरिङको र तनहूँ कास्कीको बीचमा पर्ने ढोर राज्य सानो भएपनि खानहरूले स्वतन्त्र अस्तित्वमा

ल्याएका थिए । राजा कर्णखान पछि क्रमश: उच्चखान, अजरखान, जयन्तखान, अधरखान, जयन्त खान र जिदखान (घुरखान) सम्म खासै वर्णन योग्य सामग्री प्राप्त भएका छैनन् ।

**राजा जिदलखान (घुर खान) (वि.सं. १८२८) :**

आठटीका शाह वंशावलीले राजा जयन्तखानको तिऱ्याली पछि अम्बरखानका सौतेनी भाइ घुऱ्याखान गह्रौंका राजा भए भन्ने उल्लेख गरेको छ । तिऱ्यालीको अर्थ तीरहानी भन्ने अर्थ हुनाले राजा जयन्तखान तीरन्दाज चाँदामारी वा त्यस्तै घातक घटना पर्नाले मृत्यु भएको भन्ने अर्थ बुझ्नुपर्ने स्थिति छ ।[३८]

राजा घुरखानको राज्यकालमा वि.सं. १८२८ साल वैशाख २७ गते नेपाली सेनाले किहूँ भन्ने ठाउँमा दखल गरे । त्यसै वर्षको जेष्ठ २५ गते गृहाकोटमा भीषण युद्ध भयो र त्यस युद्धमा भीरकोट राज्य नराम्रोसँग पराजीत भयो र भागाभाग मच्चियो । भोलिपल्ट जेष्ठ २६ गते क्याग्मीदग्धीमा नेपाली सेनाले भीरकोटे सेनालाई पुन: घेराउ गर्दा वाध्य भएर भीरकोटेहरूले आत्मसमर्पण गरे । त्यसै युद्धमा तनहुँका ९६ जना योद्धा काटिए । त्यहाँ भीरकोटलाई मद्दत गर्न गह्रौं र पैयूँको शक्ति पनि जुटेकोले नेपाली सेनाले गह्रौंमा पनि जेष्ठ ३१ गते आक्रमण गरिदियो । भीरकोट अन्तर्गतको गृहाकोट युद्धमा तनहूँको सेनाले नेपाललाई मद्दत नगरी शत्रु सेनालाई मद्दत गरेको हुँदा तनहूँ र नेपालको शत्रुभाव बढ्न गयो । त्यस युद्धमा नेपाली सेनाको नेतृत्व केहरसिंह बस्न्यातले लिएका थिए । नेपालीहरूले संयुक्त भएको चौविसी सेनाको हतियार खोसी धपाई दिएका थिए । तर ९६ जना तनहूँका सेनाले भीरकोटे राजाको ईशारामा चलेका हुँदा नेपालीहरूद्वारा मारिए । गृहाकोट र क्याक्मीदग्धीको युद्धमा भीरकोटेहरू हारेपछि गुल्मीका राजा सत्यधन शाहले गह्रौंकोटे राजा घुरखानलाई संरक्षण दिन भनी गुल्मीतिर लगे । किनभने गुल्मीका राजाकी छोरीपट्टिबाट गह्रौंकोटे राजा जन्मेकाले त्यसो गरेका थिए । गह्रौंका राजा गुल्मीतिर पलायन गरेपछि त्यो राज्य पनि नेपालको अधिनमा परेको थियो ।[३९]

नेपालको पश्चिम अभियान बिषयमा श्री ५ पृथ्वीनारायण शाह सामु तनहूँ र लमजुङका शक्तिशाली राज्यहरूले नेपालको आश्रय स्वीकार गरेका हुनाले एकै झट्कामा कालीगण्डकीसम्म विजय संभव हुने ठानी उत्तरतिर वंशराज पाँडे, दक्षिणतिर केहरसिंह बस्न्यातलाई दलमुखी बनाई ५००/५०० सिपाहीसाथ पठाइयो । वंशराज पाँडेलाई लमजुङपट्टिको पनि सामान्य मद्दत मिलेको थियो । त्यस दलले कास्कीको भण्डारीढीकमा ठाना हाल्यो । कास्कीका राजाले नेपालको विरोधमा लोहा लिंदा वरसाम्मीमा युद्ध पऱ्यो । नेपाली सेनाले कास्कीको वाधा पन्छाई नुवाकोट पुगी टेकनको देउरालीमा झड्प भयो । नुवाकोटे राजा भीरकोटतिर भागेकाले नेपाली सेना नुवाकोटमा थर्पु हाली मुकाम गऱ्यो । अर्कोतिर केहरसिंह बस्न्यातले रिसिङ र ढोरलाई नेपालमा मिलाए । नुवाकोटमा बसेका वंशराज पाँडेले भीरकोट माथि चढाई गर्दा भीरकोटेले आत्मसमर्पण गरे । गह्रौं राज्यका नावालक राजालाई मन्त्रीहरूले मन्त्रणा गरी गुल्मीतिर पलायन गर्न लगाएर रक्षा गरे । नेपाली सेना भीरकोट बस्यो ।[४०]

वि.सं. १८४२ आषाढ २ गते कास्की र नुवाकोटको सेनालाई नेपालले हराई १६ गते गह्रौं माथि विजय गरे ।[४१] राजा जिदलखानको विवाह गुल्मी चारपालाका राजाकी छोरीसँग भएको र नेपालको आक्रमण पछि गह्रौंका राजा घुरखानलाई थोर्गामा बसी गुजरा गर्ने आश्रय मिल्यो । राजा घुरखानलाई श्रीभक्त खान पनि भनेको थाहा पाइएको छ । त्यसपछि सो वंशमा पूर्णचन्द्रखान र गुप्तबहादुर खानले गह्रौंको ठेक्का राज्यको अख्तियार पाएका थिए ।[४२]

**ढोर राज्य**

आठटीका शाह खानदानमध्ये ढोर राज्य पनि एक हो । २००० घरकुरिया आवादी रहेको ढोरको सैन्यशक्ति पनि त्यत्ति नै थियो । गरहूँकोटे राजा दशरथ खानका चौथो पुस्ताका राजा महीपति खानका जेठा कर्णखान गरहूँको राजा भए भने उनका कान्छा छोरा दशरथ खानले ढोर राज्यको स्थापना गरे । त्यसरी इतिहासको कालक्रम विचार गर्दा

वि.सं. १६२०-२५ तिर ढोर राज्यको स्थापना भएको कुरा जानकारी हुन्छ । ढोर राज्य पोखराबाट बग्ने सेतीनदी तनहूँको खैरनीटार पुगेपछि पश्चिमपट्टि समथर उर्वा फाँट परेको जमीनलाई ढोर भनिन्छ । ढोर राज्यको पूर्वतर्फ रिसिङ, तनहूँ, पश्चिमतर्फ नुवाकोट र भीरकोट, उत्तरतर्फ नुवाकोट र कास्की, दक्षिणतिर घिरिङ गह्रौं जस्ता राज्यहंरू पर्दथे । गजरकोट भन्ने ठाउँ पनि ढोर राज्य अन्तर्गत पर्दथ्यो ।

## राजा दशरथ खान (वि.सं. १६२० - २५):

राजा दशरथ खान ढोर राज्यका संस्थापक मानिन्छन् । ढोरको भीमवाँघकोटमा यिनको गृष्मकालीन मुकाम थियो भने ढोरफिर्दी फाँट बगैंचामा शीतकालीन मुकाम रहेको थियो । राजा दशरथ खानले गरहूँ राज्य स्थापनाकालबाटै स्थापित ढोरवराहको मन्दिर जीर्णोद्धार गरेका थिए । ढोरबराह मन्दिरको अगाडि पोखरी पनि उनैको राज्यकालमा निर्माण भएको थियो । स्थानीय किंवदन्ति अनुसार पहिले ढोरवराह मन्दिर निर्माण नहुँदै पहराको चिरोबाट पानीको फोहरा निस्कने र त्यसपछि वराह बनेल कराएजस्तो आवाज आउने गर्दथ्यो । आवाजका साथ धूवाँको मुस्लो पनि आउँथ्यो र मानिसहरू अचम्ममा पर्दथे । पछि त्यहाँ मन्दिर निर्माण गरियो र भक्तजनहरूले नित्यपूजा चलाउन थाले । त्यहाँका पूजारी लम्साल ब्राह्मणहरूका अनुसार पूजारीलाई ५२ रोपनी ६ मुरी माटो गुठी छ र पूजा दक्षिणाबाट उनीहरूको गुजारा चलिआएको छ । सो गुठीको स्थापना ढोरका राजा दशरथ खानले गरेको भन्ने पनि थाहा हुन आएको छ । ढोरवराहको पोखरीका माछाले वलिको रगत खान्छन् भने माछा मार्ने चलन छैन ।४४ उक्त मन्दिरमा परापूर्वकालदेखि औंसी, एकादशी, रामनवमी वाहेकका दिन वलि दिइन्छ । कुनै कामना गर्ने व्यक्तिले ढोरवराहमा भाकल गर्दछन् । मनोकामना पूरा भएपछि पूजा गर्न जान्छन् । पूजा नगरे सपनामा चेष्टा दिन्छन्, राति कराउँछन् भन्ने जनविश्वास पहिलेबाट रहिआएको छ । पहिले जस्तो आजकल उक्त मन्दिरमा वराहको आवाज निस्केको थाहा पाइएको छैन । अनि वराह भगवान्‌ले पृथ्वीको उद्धार गरी आएको आवाज हो भन्ने गहिरो विश्वास अद्यापि त्यस भेगमा व्याप्त रहेको पाइन्छ ।

## राजा कीर्ति खान (वि.सं. १६५०):

राजा कीर्तिखानले ढोरास्थित सिद्धवराहको स्थानमा राम्ररी सुधार कार्य गर्न लगाएका थिए । किनभने सिद्ध वराहको महिमा ज्यादै उच्च रहेको कुरा राजा र प्रजालाई जानकारी भयो ।

पश्चिमे शुक्लगाण्डक्या ढोरस्य गिरिगौहरात् ।
उद्‌भुता सिद्धलहरी वाराही सरिदुद्‌गता ।
तरङ्गा मानसोतुङ्गा गुहा गर्भात् क्षणे क्षणे ।
उल्लसन्ति समं मत्स्यैः समुद्रैस्तुङ्गपर्वते ॥९७॥
सर्वत्राऽविरलं मूलं जलस्य जनगोचरम् ।
विरलं मूलमत्रास्ते विमलं वलवज्जलम् ॥९८॥
जनै प्रतीयते मृष्टः शैलगर्भेऽपि सागरः ।
वाराही-सलिलाऽऽसिक्तैर्दुर्भिक्षं नैव लक्ष्यते ॥९९॥
सिद्धवराहलहरी हरिदन्तरालं सालङ्करोति क्लनाद विशुद्ध-धारा
तारादिमण्डल-मनोहर पुष्प भारास् ताराषणाइव विभान्ति दिवा निशासु ॥१००॥ ४५

राजा कीर्तिखानले गजरकोटलाई पनि आफ्नो राज्यक्षेत्रमा सम्मिलित गराई ढोर राज्यको क्षेत्र विस्तार गरेका थिए । किनभने गजरकोटमा फलाम खानी हुनाले त्यहाँको खनिज स्रोत परिचालन गर्ने राज्यहरूको नीति हुनाले खानी विशेषज्ञ खनेल, आग्री, आफ्रे र कामीहरूलाई संलग्न गराइन्थ्यो । आफ्ना वन्धुहरू भन्दा पृथक् मत राख्ने ढोरका राजा कीर्तिखानले आफ्नै वाहूवल र बुद्धिवलले राज्यको आर्थिक उन्नति गरेका थिए । त्यसका निम्ति उनले प्राकृत खनिज स्रोतको उपयोग गर्ने नीति लिएका थिए ।[४६]

राजा कीर्तिखानले ढोरमा आवादी बढाउनका निम्ति जमीन फँडानी गरी खेती गर्न प्रोत्साहित गरे । उनले ठाउँ ठाउँमा खोलानालामा बाँध निर्माण गरी नहर र कुला काट्न र सिंचाई सुविधा पुऱ्याउने बन्दोबस्त मिलाए । उनकै राज्यकालमा ढोरफिर्दी फाँटमा खेत विराउने काम आरम्भ भएको थियो । तत्कालीन समाज कृषिप्रधान थियो ।

राजा कीर्तिखान पछि क्रमशः सुन्दरखान, वलिखान, विष्णुखान, नरेन्द्रखान, कृष्णखानसम्मका वर्णन प्राप्त भएका

छैनन् । यस बारेमा खोजी जारि रहेकोले भविष्यमा नयाँ-नयाँ कुरा जानकारी हुनेछ भन्ने आशा राख्न सकिन्छ । ऐतिहासिक कालक्रमको विचार गर्दा ढोर राज्यमा युक्ति र बुद्धि भएका मानिसहरूको बसोबास रहेको थाहा पाइएको छ । विद्वान्, तार्किक, न्यायिक र भविष्यवक्ताको निम्ति ढोर राज्य एकीकरण पहिलेबाटै प्रख्यात रही आएको थियो ।

**राजा शिवनारायण खान (वि.सं. १७९५) :**

ढोरका राजा शिवनारायण खानको नाम नेपालको इतिहासमा प्रसिद्ध छ । गोरखाका राजा नरभूपाल शाहका समकालीन यिनी आफ्ना राज्यका भैयाद गोदेखानको नामले पनि प्रख्यात थिए । त्यस समयसम्म लमजुङ र गोरखाको चीरशत्रुता चलिरहेकोमा ढोर राज्य चौबिसी क्षेत्रभित्र पर्ने र राज्य पनि सानो हुनाले चौबिसीको समूहमा लागेको थियो । गोरखालीहरूले लमजुङेहरूलाई हराउनुका साथसाथै मकवानपुरमा आएका नवावको सेनालाई पनि हटाएको देखि आत्तिएका लमजुङ आदि चौबिसी, बाइसी राज्यहरूले गोरखाको नाश गर्न भनी न्यायनिसाफ गर्न र भेद पार्ने कुरामा कहलिएका ढोर राज्यका खान विचारीका पास गए । उनै ढोर राज्यका खान विचारी गोदेखानलाई पायक पर्ने ठाउँमा निम्ता गरेर जुन राज्यमा जे असजिलो पर्थ्यो, बुद्धिमानीपूर्वक समस्या फुकाई माग्दथे । न्याय निशाफ तर्फ कुनै अरूले छिन्न नसकेका झगडा र झमेलाहरू उनै ढोर राज्यका विचारी गोदेखानकहाँ पठाइन्थे । यिनले त्यस्ता झै-झमेला अनुभवका भरमा बुद्धिमानीपूर्वक किनारा लगाइदिन्थे । चौबिसीले उनीसँग गोरखा बढ्दै गएकोमा चिन्ता व्यक्त गरी विचारीको राय बुझ्न प्रश्न राखे । गोरखा राज्य बढ्नुको वास्तविक कारण देवतापितृको मात्र पक्ष हो कि राज्यमा बुद्धिमानी मानिसहरू पनि छन् भन्ने कुराको परीक्षण गर्न एउटा जुक्ति लगाई चारवटा प्रश्न तयार पारी गोरखाबाट त्यसको सहि अर्थ लगाई माग्न पठाउने विचार गरे । त्यसको जवाफ समयभित्रै नदिएमा गोरखालाई सबै चौबिसीहरू मिली ध्वस्त पारिने छ भन्ने धम्की समेत लेखिएको थियो । ती चारवटा प्रश्नमा "बढैया, घटैया, बढैयावि घटैयावि, नबढे नघटे" थिए । त्यही किसिमको खलतार पत्र लेखी चौबिसीहरूले सल्लाहगरी गोरखाका राजाकहाँ पठाएका थिए ।

ढोरका गोदेखान विचारीका बुद्धिबाट चौबिसीको समूहले पठाएको उपर्युक्त प्रश्नको हल गर्न भनी गोरखाका राजा पृथ्वीपति शाहले सम्पूर्ण भारदारहरूलाई भेला गराई पढेर सुनाउन लगाए । सबैले सुनेपछि गम्भीरता साथ विचार गर्दै थिए । त्यसैबेलामा गोरखाका कान्छा साहेबज्यू रणदूर्लभ शाहले त्यसको अर्थ सजिलैसँग गरेर पत्रोत्तर पठाई दिए । उक्त जवाफमा बढैया = तृष्णा, घटैया = आयु, बढैयावि घटैयावि = पापपुण्य, नबढे नघटे = प्राक्तनकर्म भन्ने अर्थ गरिएको थियो । साथै रणदूर्लभ शाहले त्यस्तो प्रश्न ढोरका विचारी गोदेखानले गर्न सक्तछन् अरूले गाह्रै पर्छ भन्ने घोषणा पनि सोही सभामा प्रकट गरेका थिए ।[४७]

गोरखाबाट पठाइएको प्रत्युत्तर चौबिसीको समूहमा पुगी छलफल गर्दा कूटनीतिको अनुभवले परिष्कृत एक परिपक्व व्यक्तित्व ढोरका विचारी गोदेखानले विचित्रको भविष्यवाणि गरेका थिए । उक्त भविष्यवाणि अनुसार एकै राज्यमा विद्या, बुद्धि र पराक्रम एकै ठाउँमा जुटेको हुँदैन, जहाँ जुटेको छ त्यहाँ भगवान् नारायणको वास हुने हुँदा परन्तुमा बाइसी-चौबिसीलाई गोरखाले पराजीत पार्ने त्यसै गोरखा राज्यले विजय गर्ने जस्तो लाग्छ भनेका थिए । त्यसपछि सबै चौबिसी राजाहरूका भलापाँहरू आ-आफ्ना राज्यतिर फर्केर गए । ती ढोर राज्यका विचारी गोदेखान राजा शिवनारायण खानको राज्यकालमा पनि जीवित थिए ।

वि.सं. १८२८ बैशाख २७ मा नेपाली सेनाले किहूँ दखल गरे । जेष्ठ २५ गतेमा गृहाकोटमा युद्ध हुँदा भीरकोटे राजा हारी गुल्मीतिर भाग्न सफल भए । भीरकोटे सिपाहीले आत्मसमर्पण गरे । भीरकोटे सेनापट्टि नेपाली पक्षमा युद्ध गर्न गएका तनहूँका ९६ जना सिपाही त्यतिखेर त्यतिखेर काटिए । जेष्ठ ३१ गते भीरकोट गह्रौं र पैयूँमाथि गोरखालीले विजय गरे । त्यसै सिलसिलामा नेपालीले सतहूँमाथि आक्रमण गर्दा सरदार केहरसिंह बस्न्यात सहित ५०० सिपाही मारिए । काजी वंशराज पाँडेलाई पर्वतले पक्रेर लगे । माघ १२ गते चौबिसीको मारबाट भागी ढोरमा पुगी लुकेका नेपाली

सेनालाई चौविसीले आक्रमण गरे । ढोरका राजा शिवनारायण खान त्यतिवेलासम्म त करकापमापरी नेपालकै पक्षमा थिए । तर चौबिसी सेनाले संयुक्त आक्रमण गरेपछि ढोरका राजा पनि चौविसीतिर मिलेकाले नेपाली सेनाले वाध्य भएर आत्मसमर्पण गऱ्यो । नेपालका सरदार प्रभु मल्ल र रणसूर पाँडे जस्ता भारदारहरू पक्राउ परे । केही सेना उम्कन सफल भए । भोलिपल्ट वा माघ १३ गते नेपालले भीरकोट, पैयूँ र गह्रौं माथि गरेको विजय पनि कुनै अर्थ रहेन, पुरानै राज्यमा फिर्ता भए । माघ १४ गते अतिवल विष्टले रिसिंङ खाली गरिदिए । माघ १५ मा रातारात गरी तनहूँ छोडी नेपाली सेना मर्स्याङ्दी नदी तरी पूर्वतिर लागेर सुरक्षित महसुस गरे ।[४८]

पृथ्वीनारायणको पश्चिम विजयअभियानको सिलसिलामा आरम्भमा केही विजय गर्न सकिने संकेत मिलेता पनि सतहूँमा एकत्रित वलिष्ट फौज जम्मा गरी चौविसीले मुकाविला गर्दा नेपालीले विजय गरेका ठाउँमा राखेका चौकी समेत फिर्ता गर्नुपर्ने गरी नेपाली सेना ठक्कर खाँदै ढोर पुग्यो । १५ दिनसम्म नेपाली सेना भीरकोटमा बसेपछि कुण्ठित भएर ढोरतिर लागे । ढोर राज्यका नेपाली सेनालाई घेराउवाट उम्काउन काजी श्रीहर्ष पन्थ, काजी धौकलसिंह बस्न्यात सतीघाटसम्म पुग्दा ढोरको घेरा छुट्यो ।[४९] नेपाली सेनाले पश्चिम विजय गर्न अर्को जमर्को गर्नुपर्ने भयो ।

## राजा कीर्तिखान (वि.सं. १८३५)

राजा शिवनारायण खानको मृत्युपछि ढोरको राजा कीर्तिखान भए । राजा कीर्तिखान बाबुजस्तै पुरुषार्थी र नेपालका समर्थक थिए । उनका सल्लाहकार गोदेखानले गोरखा बढेर आए पछि विरोध नगर्नु बरु मद्दत गर्नु भन्ने भविष्यवाणी गरेका थिए । त्यसकारण पनि ढोरका राजा कीर्तिखान आफ्नु बुता नपुग्दा नेपालका पक्षधर भए ।

राजा कीर्तिखानका बाबु शिवनारायण र आमा कुण्डलावतीले ढोरका अम्वलमध्ये मुगरनास भन्ने ठाउँमा एउटा धर्मशाला, पानीपौवा र शिवालयको स्थापना गरेका थिए । राजा कीर्तिखानले सोही पौवामा पानी राखी वटुवाको तीर्खा मेटाउने बन्दोबस्त र वटुवा, जोगी सिद्धहरूको बसोवासका निम्ति केही जमीन गुठीको रूपमा छुटयाई दिएका थिए । धर्मशाला पानीपौवा वरपरको जमीन वगैंचा वनाई किसिम किसिमका फलफूल र कन्दमूलका विरुवा रोपी त्यसको संरक्षण र संवर्द्धनको बन्दोवस्त पनि मिलाई दिएका थिए ।

वि.सं. १८४२ जेष्ठ ३० गते दलजीत शाहले युद्धविना कास्कीको रूपाकोट दखल गरे । त्यसको भोलिपल्ट विनायुद्धले अर्घौं क्षेत्रमा अधिकार गरे । आषाढ १ गते कास्कीकै सराङकोटमा नेपाली सेनाले अधिकार गऱ्यो । त्यसपछि कास्कीका राजा छोरासहित पलायन गरी नुवाकोटतिर लागे । आषाढ २ गते कास्कीको सेना नुवाकोटको आड लिई नेपाली सेनालाई रोक्न बसेको चालपाई नुवाकोटतिर लाग्दा नुवाकोट नेपालको अधिकारमा पऱ्यो । नुवाकोटमा सतहूँका राजाले नेपालको आधिपत्यलाई स्वीकार गरेका हुनाले नेपाली सेनाको एउटा आश्रय सतहूँकोट हुन गयो । आषाढ १६ गते सतहूँकोटको तयारीपछि नेपाली सेनाले गह्रौं माथि आक्रमण गऱ्यो । गह्रौंकोटको सेना युद्धमा ठहर्न नसकेपछि त्यहाँका राजालाई गुल्मीका राजाले भगाई कालीपार पुऱ्याएका थिए । गरहूँका राजा भक्तखान ९ वर्षका मात्र थिए । पछि उनले नेपालको आधिपत्य स्वीकार गरेका थिए । त्यसपछि क्रमैसँग रिसिङका राजा वेणीप्रसाद सेन, चरिकोटका राजा चक्रपति खान पनि नेपाल सरकारका अधिनमा आए । ढोर र पैयूँका राजाहरू कमजोर हुनाले र चौबिसीको चेपुवामा परेका हुनाले त्यसताका चौबिसीका समूहमा लागेका थिए । त्यो थाहा पाएर नेपाली सेनाले आषाढ २० गते दखल गऱ्यो । पैयूँका राजाले नेपालसँग सम्वन्ध नराख्ने हुँदा राज्य गुमी स्वतन्त्र भए भने ढोरका राजा कीर्तिखानले नेपालको आधिपत्यलाई स्वीकारी नेपालको विस्तार अभियानमा ससैन्य संलग्न रहने भए ।

ढोरका राजा कीर्तिखानले आफ्ना सिपाहीसाथ नेपालको पश्चिम गढवालको विजय अभियानमा लागेका थिए । उनले क्रमश: कुमाऊँ, गढवाल, बाह्र ठकुराई, अठार ठकुराई कहलूर, हंडूर, बूसेर, कोथलका युद्धमा विजय गर्दै जयथकको युद्धमा दाखिल हुन पुगे । फलस्वरूप आफ्ना मातहतका ५०० ढोरेली सेनाको नेतृत्व गर्दै जयथकको किल्लामा आक्रमण गर्न जाँदा उनले इज्जतसाथ वीरगति प्राप्त गरे । उनी नेपाल राष्ट्र निर्माणका एक स्तंभ र राष्ट्रिय विभूति हुन् । त्यसकारण

नेपाल सरकारले उनका छोरा जंगवीर खानका नाउमा राजा कीर्तिखानको मरवट भनी खेत १।२० दिइएकोमा जंगवीरका कान्छा बाजेका नाति शुभानखानले लालमोहर मरवटको भोगगर्ने अख्तियार पाएछन् । पछि त्यसलाई वि.सं. १८७९ पौष सुदि २ रोज १ मा पुन: जंगवीर खानकै नाउमा मरवट सरौट थमौती गरिएको छ । यस्ता प्रमाणहरू हेर्दा ढोर राज्यले नेपालको एकीकरणमा महत्त्वपूर्ण योगदान दिएको कुरा प्रमाणित हुन्छ । (परिशिष्ठ नं. २) पछि सोही पत्र बमोजिम १८९४ मा ढोर नुवाकोट अम्बलमध्ये पाखेडाँडा भगवती स्वाँरोसमेत खाम्पेमुनी हिलेपानी खिक्याङदी दोभानसम्मको जमीन छापमानचामल हलवन्दी पेटिया भत्ता सोह्रानीदर्ताको लालमोहर अनुसार भोगगरी आएकोमा वि.सं. १८९५ मा जफत भएको थियो । पछि त्यसबारे साँचो कुरा खोली विन्ति पत्र गर्दा वि.सं १८९८ भाद्रवदी १२ रोज ७ मा छापमाना चामलहलवन्दी पेटि या भत्ता सोह्रानी दर्ता गरिएको थियो । (परिशिष्ठ नं. ३)

वि.सं. १८९७ बैशाख वदि ३ रोज ६ मा श्री ५ राजेन्द्रबाट ढोरका जंगवीरखानका नाउमा ढोरमध्ये मुगरनासा भन्ने ठाउँमा बटुवालाई सुविधा पुऱ्याउन राजा शिवनारायण खानकी रानी कुण्डलावतीले बनाएको पौवापानीको पुन:स्थापना गरी दिन ढोरकै देउराली भञ्ज्याङको पट्टबाँझो जमीनमा पौवा धर्मशाला बनाउनु र त्यसैदेखि उत्तर भैस्याआहालसम्मको १ पाथी विज जाने जमीनमा फूलवारी बनाउने गुठी थप गरिएको थियो । त्यस मितिसम्म पौवालाई गुठी भनी तालवेशी खेतमुरी ३० थमौती गरी पानी खुवाउने र रेखदेख गर्नेलाई अमालीकोरैरकम झारा, चौधरीरकम माफ गरिएको लालमोहर प्राप्त भएको छ । त्यसै लालमोहरका आधारमा आफ्ना खाँतिरजामासँग पौवा धर्मशाला निर्माण गरी पानी राखी वटुवालाई तीर्खा मेटाउनका निम्ति सदावर्त चलाउनु भन्ने अख्तियार प्रदान गरेको प्रमाणित हुन्छ ।(परिशिष्ठ नं. ४) यसरी ढोरका राज परिवारलाई नेपाल दरवारले सुदृष्टी राखेको भन्ने पुष्टि हुन्छ ।

## सतहूँ राज्य : (परिशिष्ठ नं. ६-७-१५)

आठटीका शाह खानदानको एक परिवारको राज्य नुवाकोट शाखा हो । मिञ्चाखानका माहिला छोरा शिरबुम्वखानले सतहूँ राज्यको स्थापना गरे । सतहूँ राज्यको आवादी २००० भनिएको भएपनि आँटिलो र धनधान्यपूर्ण मानिन्थ्यो । सतहूँको पूर्वतिर कास्की र नुवाकोट, पश्चिममा पर्वत, उत्तरमा कास्की र पर्वत र दक्षिणमा भीरकोट, ढोर र गह्रौं पर्दथे । यस राज्यको स्थापना राजा वडावम्म वा शिरबुम्बखानले गरेका र उनको राज्य स्थापना वि.सं. १५१० ताका भएको अनुमान ऐतिहासिक तारतम्यबाट गर्न सकिन्छ ।

## राजा शिरबुम्वखान (बडाबम्मखान) (वि.सं. १५१०-१५७५)

राजा शिरबुब्वखानले सतहूँकोटमा आई आफ्नो राज्य स्वतन्त्र रूपमा स्थापना गरेका थिए । यिनलाई वडावम्म पनि भनिएको कारण खुलेको छ । यिनी भगवान् शंकरको बमभोलेबाबाका उपासक थिए र नित्य एक रूद्री गराई गाईको दुधधारा अर्पण गर्ने भएबाट यिनलाई बडावम्म भन्ने नाम पनि दिइएको थाहा पाइन्छ । वमभोले बाबाको निम्ति दूधधारा दिन गाई पाल्नु पर्ने भएकोले सतहूँ पसल (सातुपसल) गैह्री जाँघर भन्ने ठाउँमा एक ब्राह्मण शिवलालपाध्य/सुवेदीलाई बोलाई नित्य रूद्री पाठ गर्न र दरवारमा गाईको दूध पुऱ्याउन भनी विर्ता जमीन प्रदान गरेका थिए ।[५०]

राजा शिरबुम्वखानले आफ्नो राज्य अन्तर्गत पर्ने सतहूँमा श्री शिवको स्थापना गरी त्यहाँ नित्यपूजा गर्नका निम्ति बगैंचा र खेत छुट्याई त्यसैको आयबाट चलाउने बन्दोवस्त मिलाएका थिए । उक्त सतहूँ शिवको पूजा गर्ने काममा ढकाल थरका ब्राह्मणलाई अख्तियार दिई गुठीको चिताईको काम सुम्पिएको हुँदा नेपालको एकीकरणपछिसम्म पनि निजकै सन्तानलाई परापूर्वदेखि चली आए मुताबिक गर्ने पत्र गरिएको थियो । (परिशिष्ठ नं. ५)

सतहूँ राज्यका राजाका कुलगुरु पौडेल थर भएका ब्राह्मणहरू थिए । राजा शिरबुम्वखानले आफ्ना गुरुलाई सतहूँ राज्य अन्तर्गत पर्ने ज्ञादीचौर माथि ठूलीपोखरी तलको जमीन ती गुरुहरूको बसोबासको निम्ति छुट्याएका थिए । त्यसरी राजाले दिएको विर्ता जगामा निज पौडेलका सन्ततिहरू फैलिंदै बसोबास गरी आएका छन् र सो ठाउँलाई "ज्ञादीवितलव"

भनिदै छ । सतहूँकोटे राजाका गुरुको नाम करुणानिधि शर्मापाध्या रहेको कुरा पनि उनैका सन्ततिबाट थाहा भएको छ । त्यसै कुलमा नेपालका प्रधानमन्त्री पं. रङ्गनाथ शर्मा पौडेल भएको कुरा पनि जानकारी भएको छ ।[५१]

**राजा ऐतबमखान (आदित्यबम खाँड) (वि.सं. १५७५) :**

राजा ऐतवमखानले आफ्नो शीतकालीन राजधानी सतहूँकोतबाट ज्ञादीचौरमा सारेका थिए । हालसम्म पनि त्यहाँ पुराना खण्डहर र अवशेषहरू रहेका छन् । राजा ऐतवमले आफ्नो राज्यलाई आर्थिक रूपवाट आत्मनिर्भर पार्ने विचारले ठाउँठाउँमा कुला, नहर र खोल्साकाटी वाँध बनाई जलखेतीपट्टि उन्नति गराएका थिए । सतहूँ राज्यमा त्यस्ता पुराना दर्जनौं कुलो र नहरहरू रहनुको कारण राजाहरूले पनि त्यस्ता कार्यमा रूचि लिएका हुनाले नै हो । शासकहरूले आफ्नो राज्यका बासिन्दालाई सुख सुविधा र सुरक्षा दिनु पर्ने धारणा राखिन्थ्यो ।

**राजा महीपतिखान (वि.सं. १६००) :**

सतहूँका राजा महीपतिखानका पालामा पर्वतसँगको सम्वन्ध चीसो भएको हुनाले आफ्नो राजधानी पुतलीखेतमा सारेर त्यहीं दरबार लगाएका थिए । त्यहाँदेखि पुतलीखेत भन्ने ठाउँ चर्चित भएको थियो । उनले ठाउँ ठाउँका वाटाघाटा, पुल, पुलेसा निर्माण गर्ने अभियान चलाए । ठाउँ ठाउँमा ठाँटी, पाटी/पौवा र धर्मशाला निर्माण गराई बटुवालाई सुविधा प्रदान गर्ने योजना गरेका थिए ।

सतहूँका राजा महिपति खानका समकालीक चौबिसी राजाहरूमा पाल्पाका मुकुन्दसेन, गुल्मीका राजा रूद्र शाह, इश्माका राजा रामसिंह राया, धुर्कोटका राजा जोगमल्ल, पर्वतमा प्रतापीनारायण मल्ल कास्कीमा शिवशाही थिए । (परिशिष्ठ नं. १०)

**राजा लेजुखान (वि.सं. १६३१)**

सतहूँका राजा लेजुखानको राज्यकालमा पर्वतसँगको सीमाना नमिली सम्बन्ध बिग्रन गयो । खासगरी सिल्मीक्षेत्रलाई पर्वतका राजा जोगमल्लले सतहूँवाट मोदीनदी तरी सीमाना मिची कब्जा गर्न ससैन्य हमला गरे । त्यसैकारणले सतहूँ र पर्वतका बीचमा ठूलै वैरत्त्व सिर्जना भयो । सानोतिनो झडप पनि भयो तर पर्वतेहरू हूल्याहा भएकाले सतहूँको केही जोर नचल्दा सतहूँले आफ्ना भैयाद छिमेकी राज्यसँग गुहार माग्न पुग्यो । पर्वतका राजा जोगमल्ललाई एउटा वंशावलीमा नागमल्ल पनि भनिएको छ । सतहूँका राजा लेजुखान र पर्वतका राजा जोगमल्लका बीच युद्ध पर्दा ज्ञादीचौरको युद्धमा सतहूँको सेना मारिएर राजाहरूको युद्धस्थलमै द्वन्द चल्यो । त्यस द्वन्दमा पर्वतका राजाले सतहूँका राजालाई तरवार युद्धमा जीते र लेजुखान त्यसै ठाउँमा काटिए । वि.सं. १६४५ को त्यो युद्धमा लेजुखान मारिए पछि उनका छोरा चामुशाही सतहूँका राजा भए ।[५२]

**राजा चामुशाही । (वि.सं. १६४५):**

राजा चामुशाहीका, टाढाका राजाकी नातेदार पर्वतकी मैयासँग विवाह गरेको दाजुको नाम बामु शाही थियो जसलाई पर्वतका राजाले आफ्नो पक्षमा मिलाई सिल्मी क्षेत्रमा कर उठाउन पठाए । तर त्यो कुरा सतहूँका राजा लेजुखानले थाहा पाई बामु शाहलाई मारी आफू त्यहाँको हर्ताकर्ता भएका थिए । त्यही झोंकमा पर्वतका राजा जोग मल्लले लेजुखानलाई मारी बामुशाहीको ठाउँमा आफैंले सिल्मीक्षेत्रमाथि हुकुम गर्न थाले । यता लेजुखानको मृत्युपछि सतहूँको गद्दीमा चामूशाही बसे । उनले आफ्ना बाबुको हत्याको बदला लिने इरादाले खान राजाहरूको सैन्य एकत्रित गरी पर्वतका राजा कल्याणमल्ल सिल्मी पसेको मौका पारी घेराउ गरेर पर्वते राजालाई त्यही तरबार युद्धमा हाँक दिई मारे । त्यसपछि लेजुखानका नाउमा शासन गर्न थाले । पर्वतका राजा कल्याणमल्ल मारिए पछि उनका नावालक छोरा राजमल्ललाई बोलाई सतहूँमा चामूशाहीलाई राजा मान्ने र सीमानाको वारेमा मोदी नदीतरी पर्वतले दक्षिणतिर नजाने भन्ने सल्लाह गरी थिति वनाएका थिए । यसरी पर्वत र सतहूँको उत्तरपश्चिमी सीमानालाई मोदीनदि रतीखोलाले पर्वत र कास्कीलाई छुन्थ्यो तापनि पर्वतले वल मिच्याई गर्दथ्यो ।[५३] त्यसलाई सतहुँले ठ्याँस खुवाएको थियो ।

सतहूँकोटे वंशावलीमा राजा चामूशाही पछि क्रमश: तुलाशाही, बहादुर शाही, क्षेत्र (छेत्र) शाही, पृथ्वीपति शाही, दावानलशाही राजा भएको वर्णन पाइन्छ । त्यसपछि पुन: चामूशाही नाम गरेका अर्कै राजा सतहूँमा भएको देखिनाले सजिलोको निम्ति पहिलोलाई I र दोस्रोलाई II भनी अध्ययनमा उल्लेख गरिएको छ । (परिशिष्ठ नं. ८-९)

## राजा चामूशाही II (वि.सं. १८००-१८२३)

सतहूँका राजा चामूशाही II को राज्यकालमा त्यहाँको बाह्य र आन्तरिक अवस्था राम्रो देखिदैन । सतहूँकोटे राजाको आर्थिक अवस्था सोचनीय बन्दै गएको थियो । त्यसकारण राजाले राम्रा-राम्रा जमीन आफ्नो हकबाट राज्यका धनीमानीबाट रकम सापट लिई रजवन्दीमा बेच्ने गरेका प्रमाणहरू भेटिएका छन् । अन्य बाइसी र चौबिसी राज्यको स्थिति पनि त्यतिबेला त्यस्तै रहेको बुझिन्छ । राजा चामुशाहीको राज्यकालमा त्यस राज्यको राजधानी सतहूँकोट रजस्थल बलमपुऱ्याडाँडामा रहेको कुरा थाहा हुन्छ । राजा चामूशाहीले जोखूपाध्याबाट रू. १३६/- सापटी रकम लिई त्यसको बदलामा ३० मुरी उब्जा हुने खेत वि.सं. १८०० मा रजवन्दक दिएको पत्र प्राप्त भएबाट राज्यको आर्थिक स्थिति नाजुक रहेको स्पष्ट देखिन्छ ।[५४] सतहूँका राजाको सम्बन्ध पर्वतसँग पुस्तौंदेखि नराम्रो भएको हुनाले अनुकूल परेमा गोरखासँग राम्रो सम्बन्ध राख्ने चेष्टा रहन्थ्यो । तर त्यस्तो दोहोरो अनुकूल चामूशाही II को पालामा परेको कुरा हामीलाई थाहा छैन ।

## राजा दीर्घराज शाह (वि.सं. १८२३-१८५२)

राजा चामूशाही II पछि दीर्घराज शाही सतहूँको राजा भएका थिए । उनको राज्यकालमा पर्वतको नेतृत्वमा चौबिसीको एक संगठन बन्न थालेको थियो । वि.सं. १८२८ मा पर्वतका राजा कीर्तिवम मल्लले चौबिसी क्षेत्रका सेना एकत्र गरी नेपालबाट पश्चिम विजय गर्न गएको सेनालाई सतहूँको युद्धमा नराम्रोसँग हराईदिएका थियो । त्यसवेला नेपालले पश्चिमतिर बलियो सेना पठाई स-साना राज्यलाई मिची सतहूँको पकुवामाथि जहरेखोलाको मुहान पञ्चासेलेक र डहरेको लेकमा आड लिई किल्ला बाँधी बसेको थियो । त्यो क्षेत्र सतहूँ राज्य अन्तर्गत पर्दथ्यो । त्यही मौका छोपी पर्वत लगायत चौबिसीको सेनाले नेपाली सेनामाथि जाई लाग्यो र भयङ्कर युद्ध चल्यो । काजी केहरसिंह बस्न्यात युद्ध गर्दागर्दै मारिए भने काजी वंशराज पाँडे चौबिसीको घेराउमा परी घाइते भई पक्री पर्वतको बेनी पुऱ्याएर थुनिए । यसरी चौबिसीले युद्ध जीते ।[५५]

सतहूँको सरहदमा रहेको नेपाली फौजलाई चौबिसीले त्यसरी हराएपछि पर्वतले सारा विजयको जस लिएकोमा सतहूँका राजालाई पटक्कै चित्त नबुझेकोले युद्धक्षेत्रमा नै दोहोरो वाक्युद्ध चल्यो । अन्तत: देवनाथ पण्डितको मध्यस्थतामा सतहूँ र पर्वतका राजाबीच सगुतामानी सन्धि गराई त्यस खिचोलालाई मिलाएका थिए । त्यस्तो महत्त्वको कार्य गरेवापत निज देवनाथ पण्डितलाई पर्वत र सतहूँमा विर्ता जमीन मिलेको थियो । सो जमीन सतहूँ अन्तर्गतको ज्ञादी गाउँको पुछारको कोइराला खेत १।२० र त्यसको घडेरी पाखा मुरि १ पाथि ५ धैयाको विउजाने जमीनलाई चारकिल्ला तोकी विर्ता गरिएको थियो ।[५६] त्यहाँदेखि पर्वत र सतहूँको बीच राम्रो सम्वन्ध रहेको बुझिन्छ । पर्वतले सतहूँलाई नुवाकोट राज्य अन्तर्गत पर्ने लामोडोहो गाउँ प्रदान गर्दा त्यो क्षेत्र सतहूँ राज्यको सरहद मानिन थाल्यो भन्ने प्रमाण वि.सं. १८३५ मा भएको थाहा हुन्छ ।

वि.सं. १८४२ आषाढ ७ गते सतहूँका राजाले नेपालसँग मित्रता गरेर पश्चिम विजय अभियानमा साथ दिने वाचा गरे ।[५७] राजा दीर्घराज शाहले वि.सं. १८०० मा चामूशाह II ले जोखूपाध्यालाई दिएको रजवन्दकीलाई नवीकरण गरेका थिए । नायव बाहदुर शाहले वि.सं. १८४३ पौष ७ रोज ३ मा सतहूँलाई दार्माको खेत वकस गरिदिएका थिए ।[५८] वि.सं १८४५ जेष्ठसुदि १० रोज ६ मा श्री ५ रणवहादुर शाहले सल्यानी रानी विलाशकुमारीलाई लेखेका पत्रमा "भिर्कोट, रिसीङ र सतहूँलाई ११ केही दलबल समेत पश्चिमतिरका सह्भारकन प्यूठान पुग्ने" भन्ने निर्देशन गरिएको छ ।[५९] वि.सं १८५२ मा राजा दीर्घनारायण शाहले रू. ३००। जनताबाट सापटी लिई जमीन रजवन्दक राखिदिएका थिए । त्यो परम्परा चौबिसीहरूमा पछिसम्म रहेको बुझिन्छ । राजा दीर्घराज शाहका छोरा टेकबहादुर

शाही भएको कुरा पनि पुरानो लेखोट वंशावलीबाट थाहा पाइएको छ ।

## नुवाकोट राज्य:-

नुवाकोटलाई एकीकरण पूर्व "छहज्जार नुवाकोट" भनिन्थ्यो ।यसको स्थापना वि.सं. १५१० मा राजा मिञ्चाखानबाट भएको थियो । मिञ्चाखानले नुवाकोटमा पहिल्यै आएर कोटकिल्ला तयार गरेको बुझिन्छ । उनका सन्तानमा जेठा भक्तिखानले बपौती नुवाकोट राज्य थामी खाए भने माहिला छोरा शिरबुम्वखानले सतहूँ राज्यको स्थापना गरे भने कान्छो छोरा विचित्र खानले कास्कीमा आफ्नो ठकुराईको जगेर्ना गरेका थिए । आँधीखोलाको मुहानमा पर्ने यो नुवाकोट राज्य अन्तर्गत पञ्चकोशीको लेक र डहरेको लेक पर्दथे । यस राज्यको चारकिल्लामा पूर्वतिर कास्की र ढोर राज्य, पश्चिममा सतहूँ, पर्वत र कास्की राज्य, उत्तरमा कास्की र तनहूँ राज्य र दक्षिणमा ढोर, सतहूँ, भीरकोट र गह्रौं राज्यहरू पर्दथे ।

## राजा भक्तिखान (वि.सं. १५१० - १५४४):-

राजा भक्तिखानको अर्को नाउँ जयमतिखान पनि थियो ।यी जन्मेको स्याङ्जाको टक्सारनेरको मट्टिखान गाउँमा हो ।यिनी जन्मेपछि सो ठाउँको नाउँ नै मतिखान वा मट्टिखान रहन गएको थियो ।नुवाकोटका राजा भक्तिखानले प्रिन्तनुपाध्या सुवेदीलाई स्याङ्जा नुवाकोटको आरुखर्क भन्ने ठाउँमा विर्ता जमिन दिई बसोबासको घडेरी समेत प्रदान गरेका थिए ।६० राजा भक्तिखानको विवाह पर्वतका मल्लजीको छोरीसँग भएको थियो । उनको नाम थाहा पाउन सकिएको छैन ।

## राजा कनकवम्म खाण (वि.सं. १५४४ - १५६७):

नुवाकोटका राजा कनकवम्म खाणले आफ्ना मावली राज्यको बहकाउमा लागेर कास्कीका राजा कुलमण्डल शाहलाई हाँक दिई चापाकोट गल्याङभित्रको पाखूरेकोलेक माथि धावा बोल्न लगाए । कास्कीका राजाले आफ्ना कुँवर भारदार कीरू कुँवरलाई पाखुरेको लेक विर्ता दान दिएकाले त्यहाँ गोठ खरक लगाई कुँवरहरूले खरक बनाई २२ खरक भनी बस्न थालेका थिए । एकाएक नुवाकोटका राजाले पञ्चासेको उत्तरी पानीढलो कास्की राज्यको सरहदमा हुँदाहुँदै त्यसमा अटेर गरी नुवाकोटे राजाले त्यहाँ आफ्नो सेना पठाई दखल गर्न लगाए । त्यो विषयमा कास्कीका राजालाई खासै जानकारी पनि थिएन । तर राती एकाएक नुवाकोटे सेनाले पाखूरेको लेकमा आई थर्पू हाली भोलिपल्ट कास्की माथि आक्रमण गर्ने तयारी गरेका थिए । गोठमा खर्क बनाई पाखूरेको लेकमा गएका कास्कीका भारदार कीरू कुँवरले साँझबाटै कल्याङकुलुङ जस्तो आवाज सुनी चीयो बस्न गए । उनले शय सवाशय जति नुवाकोटे सेनाले त्यहाँ बास बसेको चाल पाई रातैमा एक चारपाटे मूग्रो ताछेर नुवाकोटे सेना मस्त निदाएको बेलामा थर्पुमा पुगी एकै चोटमा लामलागी सुतेका सेनालाई ५ जनाको दरले सोत्तर पारेर आफ्ना खरकमा फर्केका थिए ।त्यस घटनापछि नुवाकोटले कास्कीमाथि कहिल्यै धावा गरेको थाहा पाइन्न ।

## राजा मणिराज खान (वि.सं. १५६७ - १५९९):

नुवाकोटका राजा मणिराज खानले आफ्नो राजधानीबाट पूर्वतिर पर्ने क्रिस्ती नाच्ने चौरमा राज ज्योतिषी विशैजैशीलाई कास्की गुण्टेचौर लौसीढुंगाबाट ल्याई बसोबासको विर्ता प्रदान गरेका थिए । निज बिशैजैशी (सुवेदी चुवाई) लाई राजा मणिराज खानले ६० मुरी धानखेत र २५ सर पाखो ५ मुरी घैयावारी विर्ता स्वरूप दिएका थिए । त्यसै क्रमानुसार नेपालको एकीकरणपछि पनि स्याङ्जा टक्सार र क्रिस्तीका विशैजैशीका सन्ततिहरूलाई २५ सरखेत (१०० मुरी माटो) मिनाहा गरी अरू बाँकी बिरौटो जमीनको रू. २५।- तिरो ठेकी जनरल भीमसेन थापाले विर्ता हरण गरेर रैकर बनाएका थिए ।६२ राजा मणिराज खानले उनै विशैजैशीलाई नुवाकोट कालीकामा र शिव मन्दिरमा चाहिने समीधा, मौलो र वलिको बन्दोबस्त मिलाउने जिम्मा पनि दिएका थिए भन्ने कुरा पनि जानकारी भएको छ ।

## राजा माणिक शाही (वि.सं. १५९९ - १६२८):

नुवाकोटका राजा माणिक शाहीका पालामा मल्याङदीमा कुलो काटी सिंचाई गर्ने व्यवस्था मिलाईको थियो । उनैको पालामा कार्कीनेटामा खूब आवादी बढ्न गएको थियो । नुवाकोटेहरूले आफ्ना शीपले डहरेकालेकको निगालोबाट

चूयाकोत्रा भकारी पेटारा बनाई काम चलाउँथे भने हरपनमा प्रशस्त वेतको झाडी हुनाले त्यहाँबाट वेतका लहरा जेउरा ल्याई दाम्ला डोराको काम चलाउँथे । त्यसैले नुवाकोट भेकमा एउटा उखानै बनेको थियो । "डहरेको निगालो हरपनको वेत कार्कीनेटा घडेरी मल्याङदीको खेत" इत्यादि ।[६३] त्यसका साथैराजा माणिक शाहीले फेदी खोलादेखि नुवाकोटसम्म जाने बाटोलाई चौडापारी घोडा दोहोरो चल्नसक्ने गरी बाटो बनाई त्यहाँ सिंढी छाप्न लगाएका थिए । उनले बाहेटारी भन्ने ठाउँमा एक धर्मशाला पौवा बनाउन लगाएका थिए । राजा माणिक शाहीले आफ्नो मुकाम नुवाकोटमा ठूलो दरबार र कालीमन्दिर बनाउन लगाएका थिए ।

राजा माणिक शाहीको राज्यकालमा कास्कीमा जलाल शाही, लमजुङमा नरहरि शाह, गोरखामा द्रव्यशाह र पर्वत राज्यमा राजा नारायण मल्लहरूले राज्य गरेको थाहा हुन्छ ।[६४] कास्की र लमजुङका राजाहरूसँग नुवाकोटे राजाको सम्बन्ध राम्रो देखिन्छ । तद्नुसार उनले आफ्नो नवनिर्मित नुवाकोट दरबारमा पनि थरघर र सुसारेको दरबन्दी बसाल्ने काम गरेको बुझिन्छ ।

## राजा भूपति शाही (वि.सं. १६२८ - १६५१):

नुवाकोटका राजा भूपति शाहीले नुवाकोटको टप्पूमा कालीको रक्षक एउटा भैरवको स्थान बनाउन लगाएका थिए । त्यस भैरवथानको वरपर अग्ला हुने रूखका बिरूवा रोप्न पनि लगाए । २०० मीटर ढुंगे सिंढी चढेपछि मात्र पुग्नसकिने गरी निर्माण गरेको उक्त नुवाकोटको भैरवस्थानमा उक्त सिंढी रानी शाहजंगीले लगाएको कुरा जानकारी हुन्छ । त्यसबेलादेखि उक्त मन्दिरमा निकै चहलपहल बढ्न गएको थियो । हाल भैरवको स्थानमा एउटा माटाको ढिस्को मात्र शेष छ त्यसै ढिस्को माथि राजा भूपति शाहीले भैरवको मूर्ति स्थापित गराएका थिए । पछि नेपालको एकीकरण पछि नुवाकोट उजाड भएकोले त्यो भैरवमूर्ति चोरी भएको कुरा स्थानीय बासिन्दाबाट जानकारी भएको छ । चौबिसी राजाकै पालाबाट नुवाकोट भैरवको पूजा दैनिक रूपमा हुन्थ्यो । हाल त्यहाँ वि.सं. १९२१, १९२२ र १९६४ मा चढाएका घण्टबाहेक ऐतिहासिकता सिद्ध गर्ने सामग्रीहरू उपलब्ध भएका छैनन् । ठूलादेखि साना त्रिशूलहरूमा कुनै अक्षर कुँदिएका छैनन् । वर्तमानकालसम्म पनि आफ्नो आकांक्षा पूगोस् भनी स्थानीय मानिसहरू नुवाकोट भैरवको भाकल गर्दछन् र त्यो पूरा भएपछि त्यहाँ पञ्च बलिसहित पूजा गर्दैछन् ।[६५]

राजा भूपति शाहीले मौग्दल्यगोत्रीय तिमिल्सेना थर भएका ब्राह्मणहरूलाई भैरवस्थानका पूजारी बनाई दिएका अद्यापि ती ब्राह्मणहरूले त्यस ठाउँमा नित्यपूजा चलाई आएका छन् । त्यहाँ पूजा गरेवापत् ४ मुरी १० पाथी अन्न गुठी ठेक्का स्वरूप पाउँदै छन् । जसबाट नित्यपूजा सञ्चालन गर्न साह्रै अपर्याप्त भएको छ । नुवाकोटमा पानीको असुविधा पहिलेबाट रहेकोले राजाले घर्ति थर भएका मानिसलाई पानी खेप्ने मानिसको रूपमा राखेको पनि स्याङ्जा नुवाकोट निर्मलपोखरी फोक्सीङका पण्डित रविलाल पोखरेलबाट जानकारी भएको छ । परिशिष्ठ नं. ११ ।

राजा भूपति शाहीले श्रीकाल भैरवको पूजा चलाउन भनी ठूलो द्वागऱ्या खेत ।१०, कोय्याबोटयाखेत ।१० ठूलो द्वारवेशीखेत ।२० गरी जम्मा ।४० खेत गुठी भनी छुट्याई दिएका थिए । नेपालको एकीकरण पछि पनि त्यो खेतको गुठी थमौती गरिएको थियो । बेलाबेलामा खोलोपैह्रो लागी उब्जामा धक्का पारेकोले राणाकालमा १७।३७।३ मा कसर कटाई ठेक्कामा पूजा चलाउने परम्परा शुरु गरियो । त्यसबाट येनकेन पूजा चलेकै थियो र पूजारीले पूजा गर्ने र दमाइहरूले पूजा गरी नगरा लगाउने गर्दथे ।[६६] २००७ सालसम्म नुवाकोट भैरव र कालीका देवीको पूजा परम्पराको रीतिले चलीरहेको थियो । तर त्यसपछि छाडापन आएकोले पुरानो कुराको कमैले मान्यता गरेबाट त्यहाँ पनि त्यसको धर्मलोप हुने असर देखिन्छ । आजकल गुठीलाई मोहीको कल्याण गर्ने निहूँमा रैकरमा परिणत गरी मठ, मन्दिर, गोम्बा र विहारहरू अब सिद्धिने बाटोतिर लागिरहेको स्पष्ट देखिन थालेको छ । पहिलेका पूर्वजहरूले हाम्रै समाजको समृद्धि ठानी गुठी राखेका थिए । हामीले त्यो मास्दै छौं ।

## राजा विश्राम शाही (वि.सं. १६५१-१६७८):

नुवाकोटका राजा विश्राम शाहीले नुवाकोट दरबार प्राङ्गण भित्र पर्ने पूर्वपट्टिको कुनामा कालीका देवीको पूजा गर्ने ठाउँमा एउटा राम्रो मन्दिर निर्माण गरिदिएका थिए । पहिले

त्यो मन्दिरलाई कोतघर भनिन्थ्यो र राज्यभरका योद्धाहरूले युद्धका वेलामा प्रयोग गर्ने सारा हातहतियारहरूको भण्डारन पनि गरिन्थ्यो । कालीका देवी युद्धकी आराध्यदेवी हुनाले त्यहाँ कुनै मूर्तिको स्थापना गरिएको थिएन । राजा विश्राम शाहीले सो कालीका देवीको मन्दिर बनाएको लिखित आधार पाउन सकिएको छैन तापनि भू.पू. माननीय स्व. दयाविक्रम शाहको भनाई अनुसार सो मन्दिर राजा विश्राम शाहीबाट भएको कुरा उनले परम्परादेखि सुन्दै आएको भन्ने वर्णनबाट जानकारी पाइएको हो ।

वर्तमानकालमा नुवाकोटकी कालिका मन्दिरभित्र केही प्राचीन हातहतियार तरवार, खड्ग, खूँडा, कटारी, भाला, परशू तथा दाउहरू खिया परेको अवस्थामा रहेका छन् र ती सबैको रेखदेख राम्ररी भएको छैन । त्यहाँ बडादशैंमा नवरथाभर, चैतेदशैंमा सप्तमीबाट दशमीसम्म पूजापाठ गर्ने बलि चढाउने गरिन्छ । पूजाको गुठी नभएकोले स्याङ्जाका गाउँहरू गणेशदह, पौवै जिल्ला कार्यालय, फेदीखोला, आरूखर्क जस्ता गाउँबाट पूजा खर्च र आवश्यक सरजाम पठाउने परम्परा कायम छ । पर्वमा मात्र पूजा गरिने हुँदा अरुवेला मन्दिर बन्द रहन्छ ।[६७]

राजा विश्राम शाही पछि क्रमश: त्रैलोक्य शाही, वाज शाही, नरनारायण शाही, रूद्र शाही र इन्द्रभूपाल शाहीका बारेमा सप्रमाण जानकारी प्राप्त छैन ।

**राजा अरिमर्दन शाह (अरिदम्म शाह) वि.सं. १८२६:**

गोरखा राजघरानाको नेतृत्वमा नेपाल एकीकरण भइरहेको समयमा नुवाकोटमा अरिमर्दन शाह राजा भएकाले त्यो गोरखा शक्तिले नुवाकोटलाई बाँकि राख्ने छैन भन्ने सोचाई थियो । त्यही कुरालाई मुख्य मुद्दा बनाई पर्वतका राजा कीर्तिवम मल्लले स्याङ्जाका राजाहरू र कास्की, लमजुङ र तनहूँका राजाहरूलाई पनि आफ्नो गुटमा मिलाए । वि.सं. १८२८ मा गोरखाली सेनालाई चौविसीले हराएपछि पर्वतका राजाले चौबिसी राज्यमा आफै पुगी गोप्य सल्लाह र सैन्य संगठन गर्न थालेका थिए । वि.सं १८३५ मा कीर्तिवम मल्ल नुवाकोट आइबसेका थिए । वि.सं. १८३९ मा पर्वत र लमजुङको संयुक्त सेनाले गोरखामा आक्रमण गर्दा चौबिसी शक्ति हाऱ्यो । वि.सं. १८४० फागुन २० गते नेपाली सेनाले कास्की. भण्डारीढिकको हुँदै साम्मीकोबाटो नुवाकोट पुगी डहरेको लेकमा भयङ्कर युद्ध चलेकोले नुवाकोट त्यस युद्धमा हाऱ्यो । फलस्वरूप नुवाकोट सधैंको निम्ति नेपालमा मिल्यो । मान्द्राशाही वा मानविक्रमका पालामा नयाँ दरबार लगाई आरुखर्क सरे । श्री भद्रशाही नुवाकोट बसे । आरुखर्क गएका राजाका भाइले शिवालय दरवार र बगैंचा तयार गरेर त्यहाँ राम्रो सभ्यताको विकास भएको थियो ।[६८] त्यहाँ अखण्डध्वनि पछिसम्म थियो ।

नुवाकोट पश्चिम ४ नं. को केन्द्र मानिन्थ्यो र त्यहाँ जिल्लास्तरीय अड्डाहरू निर्माण गरिएका थिए । वर्तमानकालमा त्यहाँबाट जिल्ला सदरमुकाम स्थानान्तरण भई सिद्धार्थ राजमार्ग आँधीखोलाको तटवर्ती स्थान स्याङ्जा वजारमा सरेको छ । त्यसवेलामा स्याङ्जा जिल्लाका सम्पूर्ण प्रशासनिक तथा अन्य कार्यहरू बडाहाकिमको रखेदेखमा नुवाकोटबाट हेरिन्थ्यो । आजकल ती कार्यालय भवनहरू खण्डहरमा परिणत हुन गएका छन् । जलवायू र प्राकृतिक रमणीयताले परिपूर्ण नुवाकोट ऐतिहासिक र पुरातात्त्विक दृष्टिबाट पनि महत्त्वको क्षेत्र मानिन्छ ।

समुद्र सतहबाट ६०००' उचाइमा रहेको नुवाकोटमा जाने १४ किलोमिटरको मोटरबाटो निर्माणाधीनावस्थामा रहेको छ । यहाँ हालसम्म पनि भैरवस्थान, देवीस्थान, रानीले कपाल कोर्ने ढुंगा तथा स-साना ऐतिहासिक स्मारकहरू असंरक्षित अवस्थामा रहेका छन् । पुराना समयका राजा रजौटाहरूले गरेका निर्माण कार्यका पुनरावलोकन गरी यथार्थ कुरा अध्ययन गरी नयाँ पिंढीलाई पर्यटकीय विकास गर्नसकेमा नुवाकोटको भविष्य उज्यालो पार्न सम्भव देखिन्छ ।[६९]

## टिप्पणीहरू

१. दिलीप खाँण, वालिङ नगरपालिकाका उपमेयर, गह्रौंकोट गा.वि.स. वार्ड नं. ३ पेखूवाखोरसँग संग्रहित शाहहरूको प्राचीन वंशावलीबाट उतार गरिएको आधारमा ।

२. राजाराम सुवेदी, "नेपालका शाहवंशीय कनिष्ठ

राजाहरू" **वैद्यनाथ क्षेत्र** वर्ष ९, अंक ९ (काठमाडौं: श्री वैद्यनाथ क्षेत्र विकास संस्था, २०५८, राज्यारोहण विशेषाङ्क) पृष्ठ, ४७-५०)

३. Dr. Hussain Khan, The Genesis of the "Title Shah of the Ruling Family of Nepal" **Journal of Central Asia**, Vol XII, No. 2 (Dec, 1989) PP. 83-4

४. ibid.

५. राजाराम सुवेदी "राजा कुलमण्डल शाह" **रत्नश्री** वर्ष २८ अंक २, (२०४७) पृष्ठ २४-२६ ।

६. J. Allan, **The Cambridge Shorter History of India** (Delhi S. Chand and Company, 1962) PP. 300-305.

७. H. Khan **Op. cit,** P. 86

८. कर्णाली प्रदेशमा शाहीको अर्थ आफ्ना पतिलाई जनाउने पाइन्छ:

"हिउँजति मालिका पड्यो पाटन पुरिनैन
शाही दुरै मुपन दुरै मया दुरिनैन ।"

९. बालकृष्ण पोखरेल, **खस जातिको इतिहास** (बिराटनगर उदात्त अनुसन्धान अड्डी, २०५५) पृष्ठ. १५ ।

१०. राजाराम सुवेदी, "कर्णाली प्रदेशका राजा आदित्य मल्लको शाके १२३८ को ताम्रपत्र" C.N.A.S. Journal Vol. II. No. 3. (2041 B.S.) P. 117.

११. कास्की जिल्ला ढिकुरपोखरी गा.वि.स. वार्ड नं. २ का स्व. पं. नरपति सुवेदीको पुस्तैनी संकलनमा रहेको वंशावलीबाट उदृत वंशावली ।

१२. **ऐजन**

१३. ढुण्डिराज भण्डारी, **नेपालको ऐतिहासिक विवेचना** (वाराणसी: कृष्णकुमारी देवी, २०२५) पृष्ठ, १५३-५४ ।

१४. योगी नरहरिनाथ, **इतिहास प्रकाश** (काठमाडौं: इतिहास-प्रकाश-मण्डल २०१२) पृष्ठ, ६७-६८ ।

१५. बाबुराम आचार्य, **श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाह** (काठमाडौं: श्री ५ महाराजाधिराजका प्रेस सचिवालय, राजदरवार, २०२४) पृष्ठ २ ।

१६. राजाराम सुवेदी "चौबिसी राज्यको सारतत्त्व" **गरिमा** १२० (२०४९ मंसीर) पृष्ठ ६०-६२ ।

१७. सूर्यविक्रम ज्ञवाली, **पृथ्वीनारायण शाह** (दार्जिलिङ **नेपाली साहित्य सम्मेलन** श्याम ब्रदर्स, २०३३) पृष्ठ ५-७ ।

१८. देवीप्रसाद रेग्मी "वनवासी" **आँधीखोले लोकसंस्कृति** (स्याङ्जा: चित्रलेखा प्रकाशन, २०५५) पृष्ठ १-५ ।

१९. नारायणप्रसाद क्षेत्री, **आलमदेवी र शाहवंश** (स्याङ्जा: जिल्ला पञ्चायत कार्यालय, २०३५) पृष्ठ १-५ ।

२०. ऐजन

२१. "स्वस्ति श्री मन्महाराजा शाहीखानको वंशावली लेखिते: पश्चिम दिसा उज्जैननगरी मानदेश क्षिप्रानदी चित्तबरगढका चन्द्रवंशी विक्रमादित्य जोगसिद्धराजा थिया, तनका पुत्र चल अचल २ भाइपनि जोगसिद्ध थिया तन्का पुत्रवती श्रीरानी ४ पुत्र ५० ततै समयमा श्रीमाई इष्टदेवता अम्विका अम्विकादेवता अम्विकाको पूजाहरू विकासनभइन् र विष्फोटकादि रोग्ले रानीपुत्रसबै वितिगया. चल अचल २ भाइपनि मनउदास भै योगमार्गमा प्रवीण भै श्रीप्रयागक्षेत्रमा गै पूर्वदिसावाग्मती छप्पर छाई वस्या. श्रीमाइका भक्तिका जोगले माइ प्रसन्न भइन् फलागिरी फूटी अर्को कन्यारुपप्रकट भै बोलिन्. करोवत लाग्या २ भाइका शिरका छुरी उतारी अम्विका हुँ तिमीलाई वर दिन्छु वर हौं भनी वोलिन्. ताहा देखिन् करजोरी श्रीइष्टदेवीथें वर माग्दा भया "हें माई चितवरगढका वर्जछरसवशत्रुदेखि निर्भय अदापुत्रकलत्रको जय सदातपाइको दर्शन यति वर

हामीलाई पाउँ" भन्दा २ भाइप्रति अम्विका बोलिन् हे राजन् हो मेरा नाम अम्विका हो । सरदकालमा नवरात्री विधिपूजा वलिहोमयज्ञदान प्रतिष्ठान गर्नु तिमी २ भाइले भाग्यको वरसिद्ध होला. चैत्राष्टमीमा सोहीमा वराखी श्रद्धासंग पूजागर्नु र तिमी २ भाइले व्रतमा मागेको वरसिद्ध होला भनी मर्जि भयो, चितवरगढमा बढाई भयो. शत्रुवश्य भया. निर्भय भया...... ताहादेखि कांकडा आइदेवी स्थान वनाई ज्वालाप्रकट भइन्. ताहादेषिकुलपुजाथान वनाया. ताहादेषि कालीकातीरमा आईलसर्घा थानवनाई मुका किया । ऐजन

२२. देवीप्रसाद भण्डारी, "श्री ५ पृथ्वीनारायण शाहका समयका निश्चित सम्वत् र तिथिमितिहरू" **पूर्णिमा,** पूर्णाङ्क ९ (२०२३ बैशाख) पृष्ठ ३०-७ ।

२३. राजाराम सुवेदी, "पैयूँ राज्य" **गरिमा**, पूर्णाङ्क १७३ (२०५४ बैशाख) पृष्ठ ५१-९ ।

२४. महेश्वर शर्मा, **स्याङ्जाका चौबीसे राज्यमा रुमलिंदा** (स्याङ्जा: जनकराज ढुंगाना, नीलकण्ठ काफ्ले, आस्था प्रकाशन २०५६) पृष्ठ २८ ।

२५. देवीप्रसाद भण्डारी, "ऐतिहासिक शिरोमणि श्री बाबुराम आचार्यज्यूसँग प्रार्थना" **पूर्णिमा**, पूर्णाङ्क २१ (२०२६ बैशाख-असार) पृष्ठ २२-३७ ।

२६. देवीप्रसाद भण्डारी, "ऐ. शि बाबुराम आचार्यज्यूले रचना गर्नुभएको नेपालको संक्षिप्त इतिहास", **पूर्णिमा,** पूर्णाङ्क ५० (२०३८ भाद्र) पृ. १७ ।

२७. ऐजन, पृष्ठ २९ ।

२८. दिनेशराज पन्त, "वि.सं. १८३२ देखि १८५३ सम्मको नेपालको इतिहासमा नयाँ प्रकाश पार्ने केही पत्रहरू" **पूर्णिमा,** पूर्णाङ्क १७, (२०२५ बैशाख-असार) पृष्ठ ४८ ।

२९. दिनेशराज पन्त, "आश्रित राज्यउपर बहादुर शाहले लिएको नीति" **पूर्णिमा**, पूर्णाङ्क ६ (२०२२ श्रावण) पृ. ५३ । योगी नरहरिनाथ, **इतिहास प्रकाशमा सन्धिपत्र संग्रह** भाग १ (दाङ: आध्यात्मिक परिषद्, २०२२) पृष्ठ ४-५ ।

३०. पूर्ववत्, टिप्पणी नं. २४

३१. F.B. Hamilton, An Account of the Kingdom of Nepal (New Delhi: Manjushree Publishing House 1971) PP 238-41.

३२. सुवेदी, **पूर्ववत्,** टिप्पणी १६, पृष्ठ ६०-६२ ।

३३. राजाराम सुवेदी, **गुल्मीको ऐतिहासिक झलक** (तम्घास: किरण पुस्तकालय, २०५५) पृष्ठ, ४५-६० ।

३४. नारायणप्रसाद क्षत्री, **पूर्ववत्,** टिप्पणी नं. १९, पृष्ठ १५-१८ ।

३५. गितु गिरी, **प्यूठानको ऐतिहासिक झलक** (प्यूठान: जिल्ला विकास समिति, २०५२) पृष्ठ १५-१७ ।

३६. मोहनबहादुर मल्ल, "बाइसे चौबीसे परिचय" नेपाली, पूर्णाङ्क ६६ (२०३२ माघ-चैत्र), पृष्ठ ३-३८ । विष्णुप्रसाद घिमिरे, **पाल्पा राज्यको इतिहास** (चितवन: पद्मवती घिमिरे, २०४५) पृष्ठ ३० । टेक ब. श्रेष्ठ, **पर्वत राज्यको ऐतिहासिक रुखरेखा** (काठमाडौं: नेपाल र एशियाली अनुसन्धान केन्द्र, २०४२) पृष्ठ ६ ।

३७. बाबुराम आचार्य, **श्री ५ वडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी** (काठमाडौं: श्री ५ महाराजाधिराजका प्रमुख संवाद सचिवालय, राजदरवार, २०२५) पृष्ठ ५७३, ५८८ ।

३८. मोहनप्रसाद खनाल, **इतिहास प्रभात** (काठमाडौं: मोहनप्रसाद खनाल २०२६) पृष्ठ ४६-४७ ।

३९. आचार्य, पूर्ववत्, टिप्पणी ३७, पृष्ठ ५७२-७३, बाबुराम आचार्य, "गोरखा विजकालका घटना", **पूर्णिमा**, पूर्णाङ्क २७ (२०२९ आश्विन) पृ. १६६ ।

४०. बाबुराम आचार्य, **नेपालको संक्षिप्त वृत्तान्त** (काठमाडौँ: प्रमोदशम्शेर र नीरविक्रम प्यासी, २०२२) पृष्ठ ५४-५५ ।

४१. **पूर्णिमा, पूर्ववत्,** टिप्पणी ३९, पृष्ठ १६९ ।

४२. शर्मा, **पूर्ववत्,** टिप्पणी-२४, पृष्ठ, ३५ ।

४३. सुवेदी, **पूर्ववत्,** टिप्पणी नं. १६ पृ. ६० ।

४४. साफल्य अमात्य, **सांस्कृतिक सम्पदाको प्रारम्भिक सर्भेक्षण** (काठमाडौँ: पुरातत्त्व विभाग, २०४६) पृष्ठ ५८-५९ ।

४५. योगी नरहरिनाथ, **आध्यात्मिक नेपाल एवम् देवदेशो-हिमालय** (काठमाडौं आर्षविद्या शोध केन्द्र, २०३८) पृष्ठ ४८ ।

४६. Hamilton, op.cit, no. 31, PP 240-3.

४७. रमेशजंग थापा, नेपाल देशको इतिहास "**प्राचीन नेपाल** संख्या २० (साउन, २०२९) पृष्ठ २२-२३ । दिनेशराज पन्त, **गोरखाको इतिहास** भाग १ (काठमाडौँ: दिनेशराज पन्त, २०४१) पृष्ठ, १६४-१६५)

४८. भण्डारी, **पूर्ववत्,** टिप्पणी २६, पृष्ठ १६६-६७ ।

४९. नयराज पन्त, **श्री ५ पृथ्वीनारायण शाहको उपदेश** (काठमाडौँ: जगदम्बा प्रकाशन, २०२५) पृष्ठ ९०९-१२, १०८८-८९ ।

५०. स्याङ्जा जिल्ला सतहूँ सातु पसल गैह्री जाँघरका हाकिम श्री नुवादत्त उपाध्याय सुवेदीसँग रहेको विर्ताको प्रमाणका आधारमा ।

५१. पर्वत जिल्ला ज्ञादी वितलव निवासी पं. रङ्गनाथका सन्तति भलाद्मी श्री तुलसीनाथसँगको साक्षात्कारबाट प्राप्त जानकारी ।

५२. पर्वत कुश्मा निवासी प्र.अ. श्री बाबुराम सुवेदी तथा पर्वत तिलाहारका वयोवृद्ध शिक्षक गुरु श्री नन्दलाल सुवेदीहरूसँग रहेको पुरानो नेपाली कागजमा रहेको पाण्डूलिपि वंशावलीको वर्णनका आधारमा ।

५३. ऐजनका संकलनमा "**सतुंकोट्या राजाका पुस्ता**" अन्तर्गतको वर्णन ।

५४. टेकबहादुर श्रेष्ठ, **चौबिसी प्रदेशको इतिहास** (काठमाडौँ: ने.ए.अ. केन्द्रमा बुझाएको परियोजना प्रतिवेदन अप्रकाशित २०४१-४२) पृष्ठ, १०२ ।

५५. पन्त, **पूर्ववत्,** टिप्पणी ४९, पृष्ठ ९१०-११ ।

५६. टेकबहादुर श्रेष्ठ, **पूर्ववत् टिप्पणी नं.** ३६, पृष्ठ १००-१०२ ।

५७. बाबुराम आचार्य, "गोरखा विजयकालका घटना, **पूर्णिमा,** पूर्णाङ्क २७ (आश्विन २०२९) पृष्ठ १६९ ।

५८. दिनेशराज पन्त, "आश्रित राज्य उपर बहादुर शाहले लिएको नीति", **पूर्णिमा,** पूर्णाङ्क ६ (श्रावण २०२२) पृष्ठ, ५३ । परिशिष्ठ नं. ...... ।

५९. योगी नरहरिनाथ, **इतिहास प्रकाशमा सन्धिपत्र संग्रह,** भाग-१ (दाङ आध्यात्मिक परिषद् २०२२) पृष्ठ ४०२ ।

६०. स्याङ्जा जिल्ला आरुखर्कका वेणीमाधव उपाध्याय सुवेदीको संग्रहमा रहेको प्रमाणको आधारमा ।

६१. कास्की ढिकुरपोखरीका श्री कर्णबहादुर, श्री जगतबहादुर, श्री प्रेमबहादुर वकीलको साक्षात्कारबाट प्राप्त जानकारी । हालसम्म पनि पाखुरेको लेक कुँवर क्षत्रीहरूकै छ ।

६२. स्याङ्जा जिल्ला टक्सारनुवाघरका श्री ढाकाराम सुवेदी चुवाई र क्रिस्ती नाच्नेचौर दोपहरेका श्री ठाकुरराम सुवेदीसँगका प्रमाणको आधारमा ।

६३. महेश्वर शर्मा, **पूर्ववर्त,** टिप्पणी २४, पृष्ठ ५० ।

६४. राजाराम सुवेदी, "लमजुङ राज्य" **प्राचीन नेपाल** संख्या १५० (२०५९ असार) पृ. ४९ ।

६५. अमात्य, **पूर्ववत्,** टिप्पणी ४४, पृष्ठ ६८-६९ ।

६६. Dil Bahadur Chhetri, **Documents on**

**Nepal** (Pokhara: Parvati Chettri, 1998) PP. 277-283,

६७. **अमात्य, पूर्ववत्**, टिप्पणी ६५, पृष्ठ ६८ ।

६८. शर्मा, **पूर्ववत्**, टिप्पणी २४, पृष्ठ. ५० ।

६९. रामबहादुर कार्की, "पर्यटकीय दृष्टिकोणमा ओझेलमा परेको क्षेत्र नुवाकोट" **सउना** (काठमाडौं: मुडुला कार्की कुलायन व्यवस्था समिति २०५५) पृष्ठ. ५५-५८ ।

## परिशिष्ठ नं. १

श्री

स्वस्तिश्रीमन्महाराजाधिराजकस्यरूक्का

आगेहाम्रा भरमुलुकका रजपुतकेरैका जगामा जस्कातस्काअंबलमा बसेका छौं तिमी वस्याको र तिम्रा षानषबासवस्थाको घरबारिनषोसनु तिम्राषानषवास र घरियाकरिया केटाकेटीस्मेत अमालीकोलाग्न्यारकम झाराबेठी हुलाक साउन्या फागू ओलकसेमी सिमसार माफगरिबक्स्यौं हामीलाई मान्यारकमकलमजोजो निमकसंझीमान्नु हाम्रोहुकुमजाँदा हाँजिरहनु अघि मुलुकमार्दा सर्कारमा लाग्याको र भारदारले उठायाको पारगरि दियाको बाहेक रकलपहल हुन्या जगेडा करिया चाकरबाकर जो छन् फोइबक्स्यौं आफ्ना षातिर्जमाजानी भोग्यगर इतिसंवत् १८५७ सालमितिमाघ सुदि ५ रोज २ शुभम्

स्रोत:- अर्घाखाँची जिल्ला खाँचीकोट गा.वि.स. वाड नं. ५ का श्री वीरेन्द्र शाहको संकलनबाट उतार ।

## परिशिष्ठ नं. २

ढोरका राजा कीर्तिखानको वीरगति (जयन्तक किल्लामा)

स्वस्तिश्रीमन्महाराजाधिराजकस्यरुक्का ------------------ श्री दुर्गा आगेजङ्गविरषानके तिम्रा बाबा किर्तिषानले जयतक किल्लाका लडाजीमा पर्दा षेत्र १।२० मरौट गरि तिम्रा काँछा बाज्याका नाति सुभानषानले छलि मोहर गराई लैजाँदा तिनका नाउको मोहर हानी तिम्रा नाउमा मरौट थामिबक्स्यौ नीमकको सोझो चिताई तपसिल बमोजिमको षेत ली मरौट जानी भोग्यगर --------- तपसिल-----------

ढोर ------------------------------ १।२०

फिर्दिव्यासिविचारिरहदेषि उभो जगपतिकाषेतदेखि र द्वाऱ्याका घरदेषि उभोको बाझो मुरि ---------------------- ।६०

धारापानी मुरी --------------------- ।२०

चासि माथिको विरौटो --------------- ।२०

तालव्यासि पागाको कुलो भत्क्याको बाझो --------- ।२०

इतिसम्वत् १८७९ सालमिती पौष सुदी २ रोज १ शुभं -------

मार्फत भक्तवीरथापा. मार्फत भीमसेन थापा मार्फत प्राणसाह

## परिशिष्ठ नं. ३

ढोरकीरानी कुण्डलावतीको पौवा निर्माण १८९७

स्वस्तिश्रीमन्महाराजाधिराजकस्यरूक्का ------ श्री दुर्गाज्यू १ आगे. जंगुषानके ढोरका अम्वलामध्ये मुगरनास भन्याका जगावा हाम्रा बज्याज्यू ढोरका रानी कुण्डलावतीले वनायाका पौवा धर्मसाला र तैसैको गुठ फुलवारिषेत आजतक थामिवक्सनुहुंदा सो जग्गामा बाटो चलेन ढोरका अम्वलमध्ये देउराली भंज्यां पट्टवाझो जगामा पानीको धर्मसाला पौवा बनाउछु भनी तिमिले हाम्रा हजूरमा विन्ति गर्न आउंदा ढोरका अम्वलमध्ये देउराली भञ्ज्यां पट्टवाझो जगामा पौवा धर्मशाला बनाउनु तेही देउरालीदेषि उत्तर भैंस्या आहालदेषी दक्षीन् देउरालीडांडादेषि पुर्व षोल्सीदोभान्देषी पश्चिम यति चार किलाभित्र यकपाथी वीजजान्या जगामा फुलवारी बनाउनु आजतक पौवालाई गुठी थामीयाको तालव्यासी षेतमुरि ३० थामि औं पौवा फुलवारिका चिताइ गर्न्या र पानी षुवाउन्याहरूलाई अमालीको रै रकम झारा र चौधरिको रकम माफ गरीबक्स्यौ. आफ्ना षातिरजामासंग पौवा धर्मशालाबनाई पानीको सदावर्त चलाई हाम्रो जयमनाई भोग्य गर इतिसम्वत् १८९७ सालमिति बैसाष वदि ३ रोज ६ शुभम् ---------- मार्फत् मेघराज पांडे रुजुअभिमान सिंह राजा रूजुतारानाथ अर्ज्याल (शाके १८८४ माजंगवीरसन्तति १५ घरद्वारा यस पौवाको पुनर्निर्माण २०२० रू. २७ मुरिधान लाग्यो र शिलालेख पनि राखियो)

स्रोत: योगी नरहरिनाथ, **इतिहास प्रकाशमा सन्धिपत्र संग्रह**,

भाग १ (दाङः आध्यात्मिक परिषद्, २०२२) पृष्ठ. ६५५-५६ ।

## परिशिष्ठ नं. ४

जयन्तक किल्लामा वीरगति पाउने ढोरका राजा कीर्तिखानका मरवटको थमौती पत्र १८९८ वि.सं.

श्रीदुर्गाज्यू १ ------ स्वस्तिश्रीमन्महाराजाधिराजकस्यरुक्का - --------

आगे ढोरका जंगवीरषानके ढोरनुवाकोट अम्वलमध्ये पाषेडाँडा भगवती सुवारोस्मेत षांम्यमुनि हिल्यापानीदेषिक्यौदी दोभानसम्म अघि लालमोहर भै छापमानाचावलगरि साल ९४ सम्म षाइचर्चि आयाका साल ९५ मा जफत भयो भनि हाम्रा हजुरमाविंतिपार्दा जाहेर भयो अव उप्रान्त अघिलालमोहर भै छापमानाचावलगरि ९४ सालसम्म षाइचचि आयाको साल ९८ लाई वाहालथामिवक्स्यौं आफ्ना षातिर जमासंग छापमानाचावलजानी भोग्यगर इतिसम्वत् १८९८ सालमिति भाद्रवदि १२ रोज ७ शुभम् ----------------

मार्फत प्रसादसिंह वस्न्यात: रुजु नरहरिविक्रम साह रुजु गुरुप्रसाद साह रुजु फत्यजंग साह

स्रोत: ऐजन

## परिशिष्ठ नं. ५

श्री

श्रीशिव

स्वस्तिश्री गुरुपंडितराज श्रीरंगनाथ पंडितस्य पत्रआगे शक्तिवल्लभपाध्याढकालके सतहूका १ का पूजाको र वगैंचाका चिताइको अष्तियारी तिमीलाई थामिदियौं परापूर्वको रीतले नित्यनैमित्यिकपूजा र वगैंचाको चिताई गरी शेषरह्याको गुठीका आम्दानीले भोग्यगर. इतिसम्वत् १८८६ कार्तिक सुदि ६ रोज शुभम् ------------------------------

स्रोत: स्याङ्जा सतहूँ रजस्थलका सु. चन्द्रबहादुर के.सी. संगको संग्रहबाट । ऐजन, पृष्ठ २७४ ।

## परिशिष्ठ नं. ६

स्वस्तिश्री जनरलअम्वरसिंहथापाकस्येपत्रम् -------------

आगेमेराघरवारीषायाचर्च्याकोजगा हुलाकमा दरिदिया भनी टेकवहादुर यहाकराउनआया बेहोरा येही हो भन्या राजाकाभाइछोराको षाइपाई हुलाकमादरिदैन येस्माजस्ले षिचला गर्ला बुझाउनु पर्ला. इनिको षाइपाईमा टंटानगर इनिलाई धानिदिनु इतिसम्वत् १८६५ सालमिति माघ सुदि ५ रोज १ शुभम् -------------------------

अघिभयाको दसषतको बेहोरा हो.

स्रोत: **ऐजन**, पृष्ठ, ३२९ ।

## परिशिष्ठ नं. ७

श्री १

श्रीनाथ १

स्वस्तिश्रीजनरलभिमसेनथापाकस्यपत्रम् ---------------- ---------------- आगेटेकबहादुर साहिके सतौंका अम्वलमा वैदी छुपाको पुछारढाड वाझोमा षेतमुरि १० विह्राउनाको अषत्यारगरिदिम्यू गुठीविर्ता किपट मोहो रिया अवादिगह्रापऱ्याको जगा निकासतागोगल्लि संधिसर्पनवाहेक वाझामा आफ्ना आँतका वलले कुलोझिकी षेतविह्राउनु. विह्राउन्याले वरकाररसाल ३ कोवालिदुवैवोटिषानु चौथासालदेषि २ कम्पूदफदरषानामा दाषिल गरी सालवसालतल्सीं मानी अधिआषोसमोतनास्ति गरिचलनगर इति सम्वत् १८७९ सालमिति २ रोज ५ शुभम् ----------------

स्रोत: स्याङ्जा सतौंका श्री पद्मवहादुर शाहबाट । Dil Bahadur Kshetri, **Documents on Nepal** (PokharaM Parbati Kshetri 1988) PP 366-7.

## परिशिष्ठ नं. ८

सतहूँ

स्वस्तिश्री सर्वजाचकचहरिकस्यपत्रम् ------------------- ------- आगेदाषिलाआम्दानी सतौं रजस्थल वलमपुऱ्याडाँडाको पुछार अलैचीसमेत मोही षनतरसाहीको । २ के १९११ सालको ठेक जायाको हस्ने कृतिवीरसाही २२ गंडीरुपैया आठआना ॥ जाचतहविलदाषिला भयो. तस्कोरसिदगरिदिम्यूं १९११ सालमिति फागुनवदि ६ रोज ५ शुभम् (१० सालको वालीपौषवदी १५ रोज ८ मा आगो लाग्दा मिनाहा)

स्रोत: **ऐजन**, पृष्ठ २७३ ।

## परिशिष्ठ नं. ९

श्री ३ जुद्ध र कम्याण्डर इन्चिफ पद्मशम्शेरको विरुद्ध ----------------- आगे स्याङ्जा मांलकाहाकिम कारिन्दाके उप्रान्तसतौंकोटे राजाको छोरा कम्वरवहादुर साहीसंग विवाह भयाकोनिजखसम मरिभएको जगाजमीनपनि साहुले षाइदियाकोले दुइवर्षको नावालषछोरा पालनसकिन अरु छोरिवेटीलाई भत्ताको वन्दोवस्त गरिपाउँ भनी जमादारडंवरजंगराणाको नातिनी देवजंगराणाको छोरी देवकुमारीले विन्तिपत्र चढाई पठाएको व्यहोराजाहेर भयो तसर्थ निजलाई महिना १ को मोरु १५। कादरले वर्ष १ को मोरु १८०।- येकसयअसीरुपैया भत्ताठेकीबक्सेको छ. सनदजित्हरापुगेका पछिल्ला महिनादेषि षानापाउनेगरी कितापदरिदिनुभन्ने कितावखाता दर्ता फाटका नाउमासनदभइआयाको छ हालसोवमोजिम भत्ता षर्चलेखीदिने कामगर. इतिसम्वत् १९९२ सालमार्ग ३० गतेरोज शुभम् --------------

(सदर १९९२ पौष ५ गते)

स्रोत: स्याङ्जा सतहूँका क्याम्टेन पदमबहादुर शाहको संकलनबाट । **ऐजन**, पृष्ठ २७० ।

## परिशिष्ठि नं. १०

"पश्चिमतिर हमला गर्नको लागि झारा लगाइएको वि.सं १८४१ को पत्र"

**स्वस्तिश्रीमन्महाराजाधिराजकस्यरूक्का ---------------------------------- आगे नाम्वुडाका उमाप्रति. विजयादसमीकोसायेत गरी पश्चीमतिरको काजगर्न आँटियो, तसर्थ तिमीहरूले आफ्नो ओडाका ठानाथामी जागिऱ्या ढाक्यासिपाहीले पंचहतियारली ब्राह्मनप्रजा पौनीपातले कोदालो बञ्चरो लि आफूलाई चाहिन्या साराजामलि छत्तिसैजातडक्कोझारा भै टिकाको पाइतो गरी लमजुंतनहूं भारादार छेउ रातसाजगरीपुग. सर्वथा अधिकापाला झारा भै पुगेनछौ अरे येसपालापनि झारामै निष्क्रिन नगया डंड सात्तिदुवै पछ्र गरौंला. इतिसंवत् १८४१ साल आश्वीनवदी १३ रोज १ शुभम् ----------------**

स्रोत: **पूर्णिमा**, पूर्णाङ्क ६३ (२०४१ चैत्र) पृष्ठ, ५-६ ।

## परिशिष्ठ नं. ११

नुवाकोट कालभैरव गुठी:

वि.सं. १९९४

श्री ३ जुद्ध र श्री जनरल पद्मशम्शरेको विरुद्ध ---------------------- आगे स्याङ्जामालकाहाकिंकारिंदाकथयोचित् उप्रांतपछिं ४ नं. नुवाकोट श्रीकालभैरव गुठीको लगतकिताप षडागर्नालाई जाहेर गरेकोमा बुझदा सो गुठीको ९ सालको लगतमा ठूलो द्वागाषाऱ्याखुत । १० को धां ४ घ्यूरू ठूलोदुवारवेंसी रिसानषेत । २० को धां ६। घ्यूरू २ कोप्यावोटयाषेत । १० को धां ४ घ्यूंरू ज्यायेत । ४० को धां १४। घ्यूरू । भनी लेषियेको काटयावोटयाषेत । १० को धां ४ घ्यूरू कोषलादवाइ लेषाई नगराबजाई आयेको सो वाहेकवांकि कलं ३ को षेत ।३० काउठती र चंडीथांको गेर्रो बारिपाषो जंगलषेत पुजाहारिले चर्चि अछेता पुजागरीषाई आयेको भनी पुजारिस्मेतले लेषीदियाकोले सोजगानापी गराउंदा ठूलोढुंगाषरन्याषेत ।१० मा ठहरषेत ।१४।१५ चाहारकिसिंको हुदाकिसिं भर्नागर्दा बढनदेषियेको ठूलोवेसी सिरानषेत ।२० मा ८० सालमा षोलोलागी रहेको नापीठहरषेत ।३।११।३ नापीवाट ठहरेनभनीषोलो अवादगरी सावुद भनेपछि ९ साल्कालगतवमोजिंको तीरोकायेंगरी तिरुंलाभंने मोहीकोकाजगत भनेको काटयाकोटया षेता १० नापीठहरषेत ।२४।१।२ चाहार किसिंको जगाहुंनाले ३ षंडको १ षंड किंसीभर्ना दिंदा षेत ।६।६।७ बाट देषियेको हुनाले सोबढजग्गालाई स्मेत साविककुनकाडामा साछीले निरोटेकडा सोषेत ।२४।१।२ को धां ६।८।३ घ्यूरू ७ तिरोवुझाउनमा मोही फोकागज भयेको पुजाहारीले चलंगरी आयेको मंदीथांकोगैरी वारीको तिरोमोरु ।५० लागेको स्मेत भै आयेकानापीमुचुल्का र कागजबाट देषिनाले सोगैरीवारीषानुभंने सनद र ९ सालको लागतमा स्मेतनलेषियेकोले सो षान नपाउने हुदा रैकरका लगतमादती गर्नुपर्ने भयेको र काज्यापोय्याषेत नापीठहरा ।२४।१।२ हुन आयेकोमा ९ सालकालगन वमोजिमका षेत ।१० को किसिंभर्नासमेत गरी षेत ।१५ गुठीमा थामीवाकी मात्र रैकरमादर्तागर्नु पर्ने भयेको हुंदा सो पाषाको उठति रू ।५० पचासपैसाउठती हुनेवाला वारी १ र काय्याकोय्या षेतको पटषेत ।९।१।२ नौमुरी

**परिशिष्ठ नं. ९**

श्री ३ जुद्ध र कम्याण्डर इन्चिफ पद्मशम्शेरको विरुद्ध ---- ------------- आगे स्याङ्जा मांलकाहाकिम कारिन्दाके उप्रान्तसतौंकोटे राजाको छोरा कम्वरवहादुर साहीसंग विवाह भयाकोनिजखसम मरिभएको जगाजमीनपनि साहुले षाइदियाकोले दुइवर्षको नावालषछोरा पालनसकिन अरु छोरिवेटीलाई भत्ताको वन्दोवस्त गरिपाउँ भनी जमादारडंवरजंगराणाको नातिनी देवजंगराणाको छोरी देवकुमारीले विन्तिपत्र चढाई पठाएको व्यहोराजाहेर भयो तसर्थ निजलाई महिना १ को मोरु १५। कादरले वर्ष १ को मोरु १८०।- येकसयअसीरुपैया भत्ताठेकीबक्सेको छ. सनदजित्हरापुगेका पछिल्ला महिनादेषि षानापाउनेगरी कितापदरिदिनुभन्ने कितावखाता दर्ता फाटका नाउमासनदभइआयाको छ हालसोवमोजिम भत्ता षर्चलेखीदिने कामगर. इतिसम्वत् १९९२ सालमार्ग ३० गतेरोज शुभम् - -------------

(सदर १९९२ पौष ५ गते)

स्रोत: स्याङ्जा सतहूँका क्याम्टेन पदमबहादुर शाहको संकलनबाट । **ऐजन**, पृष्ठ २७० ।

**परिशिष्ठि नं. १०**

"पश्चिमतिर हमला गर्नको लागि झारा लगाइएको वि.सं १८४१ को पत्र"

स्वस्तिश्रीमन्महाराजाधिराजकस्यरूक्का ---------------- ----------------- आगे नाम्वुडाका उमाप्रति. विजयादसमीकोसायेत गरी पश्चीमतिरको काजगर्न आँटियो, तसर्थ तिमीहरूले आफ्नो ओडाका ठानाथामी जागिऱ्या ढाक्यासिपाहीले पंचहतियारली ब्राह्मनप्रजा पौनीपातले कोदालो बञ्चरो लि आफूलाई चाहिन्या साराजामलि छत्तिसैजातडक्कोझारा भै टिकाको पाइतो गरी लमजुंतनहूं भारादार छेउ रातसाजगरीपुग. सर्वथा अघिकापाला झारा भै पुगेनछौ अरे येसपालापनि झारामै निष्किन नगया डंड सात्तिदुवै पछ गरौंला. इतिसंवत् १८४१ साल आश्वीनवदी १३ रोज १ शुभम् ----------------

स्रोत: **पूर्णिमा**, पूर्णाङ्क ६३ (२०४१ चैत्र) पृष्ठ, ५-६ ।

**परिशिष्ठ नं. ११**

नुवाकोट कालभैरव गुठी:

वि.सं. १९९४

श्री ३ जुद्ध र श्री जनरल पद्मशम्शरेको विरुद्ध ---------- ------------ आगे स्याङ्जामालकाहाकिंकारिंदाकथयोचित् उप्रांतपछिं ४ नं. नुवाकोट श्रीकालभैरव गुठीको लगतकिताप षडागर्नालाई जाहेर गरेकोमा बुझदा सो गुठीको ९ सालको लगतमा ठूलो द्वागाषाऱ्याखृत । १० को धां ४ घ्यूरू ठूलोदुवारवेंसी रिसानषेत । २० को धां ६। घ्यूरू २ कोप्यावोटयाषेत ।१० को धां ४ घ्यूंरू ज्यायेत । ४० को धां १४। घ्यूरू । भनी लेषियेको काटयावोटयाषेत ।१० को धां ४ घ्यूरू कोषलादवाइ लेषाई नगराबजाई आयेको सो वाहेकवांकि कलं ३ को षेत ।३० काउठती र चंडीथांको गेर्रो बारिपाषो जंगलषेत पुजाहारिले चर्चि अछेता पुजागरीषाई आयेको भनी पुजारिस्मेतले लेषीदियाकोले सोजगानापी गराउंदा ठूलोढुंगाषरन्याषेत ।१० मा ठहरषेत ।१४।१५ चाहारकिसिंको हुदाकिसिं भर्नागर्दा बढनदेषियेको ठूलोवेसी सिरानषेत ।२० मा ८० सालमा षोलोलागी रहेको नापीठहरषेत ।३।११।३ नापीवाट ठहरेनभनीषोलो अवादगरी सावुद भनेपछि ९ साल्कालगतवमोजिंको तीरोकायेंगरी तिरुंलाभंने मोहीकोकाजगत भनेको काटयाकोटया षेता १० नापीठहरषेत ।२४।१।२ चाहार किसिंको जगाहुंनाले ३ षंडको १ षंड किंसीभर्ना दिंदा षेत ।६।६।७ बाट देषियेको हुनाले सोबढजग्गालाई स्मेत साविककुनकाडामा साछीले निरोटेकडा सोषेत ।२४।१।२ को धां ६।८।३ घ्यूरू ७ तिरोवुझाउनमा मोही फोकागज भयेको पुजाहारीले चलंगरी आयेको मंदीथांकोगैरी वारीको तिरोमोरु ।५० लागेको स्मेत भै आयेकानापीमुचुल्का र कागजबाट देषिनाले सोगैरीवारीषानुभंने सनद र ९ सालको लागतमा स्मेतनलेषियेकोले सो षान नपाउने हुदा रैकरका लगतमादती गर्नुपर्ने भयेको र काज्यापोय्याषेत नापीठहरा ।२४।१।२ हुन आयेकोमा ९ सालकालगन वमोजिमका षेत ।१० को किसिंभर्नासमेत गरी षेत ।१५ गुठीमा थामीवाकी मात्र रैकरमादर्तागर्नु पर्ने भयेको हुंदा सो पाषाको उठति रू ।५० पचासपैसाउठती हुनेवाला वारी १ र काय्याकोय्या षेतको पटषेत ।९।१।२ नौमुरी

लगतकिताबखडागर्ने र गुठीकामकाज तपसिलकादरवन्दी वमोजिंम आम्दानीखर्चगरी कामचलाई कसर २००४ सालदेखि स्याङजा मालमावुझाउनु भनी निजपूजारीकानाउमा सनदगरीदिइ दरवन्दी बमोजिमका चलनभइ चलाएको वरावरजाची लगत कर्जाअसुगर्न कसरलगतकसी असूलगर्न माललाई अड्डैको पूर्जि पठाउने भन्ने समेत रिपोर्ट जिकिर मनासिवठहरायौं जोमर्जि हुकुमभनी नेपाल पाहाडरिपोर्ट निक्सारीले तोकबोली जोहरगरेकोमा २००४।५।४।४ मासदरभइआएकोले सो सदरभएोतोक मनासिव तपसिलका दरवन्दीवमोजिम आम्दनीखर्चगरी गुठीचलाई बांकीशेषकसर २००४ सालदेखि स्याङजामालका सालवसालवुझाउनुभन्ने समेत निजपूजारी जयन्तखानकानाउमा गुठीहुनाको सनद बक्सनुपर्ने ठहराई श्री ५ को सर्कारतर्फगुठी लगतजांच अड्डाकाहाकिमकारिन्दाले हाम्रा हजूरमा विन्तिपार्दा जाहेर भयो. सो ठहऱ्याएकोमा हामीवाटपनि सदरगरिवक्सेकोछ सोवमोजिम गर्ने काम गर -

------------- तपसिल ------------

असामी -------------------- खेत ------------- थान

जिल्लागह्लौंमध्येस्वरेक भञ्ज्याङ गरौगच्छाखेतको मोही सोऱ्याक भञ्ज्याङ वस्ने जयन्त खानठकुरी ----------------- ।४०
----------------- १६

स्रोत: स्याङ्जा माल कार्यालय । Dil Bahadur Kshetri, **Documents on Nepal** (Pokhara Parbati Kshetri 1988) PP 268-9.

## परिशिष्ठ नं. १३

स्याङजा जिल्ला भीरकोटस्थित श्रीकालीका गुठी: १९९६ वि.सं.

श्री ३ जुद्ध र कम्याण्डर इन्चिफ पद्मशम्शेरको प्रशस्ति आगे स्यांजामाल अडाकाहाकिं कारिंदाके येथोचित् उप्रान्त पश्चिं ४ नं. इलाका जिल्लै भीर्कोट्मौजे दुंभूंमौलार वडामौजाकाश्रीकालीकागुठीको लागतकितापषडा गर्नेबारे श्री ५ सर्कारगुठीलगतले जाहेरगरेको रिपोर्टमाबुझ्दासो गुठीको ६४।८। २ का सनदको नकल झिकाइहेरेका सदनपंजीलकेही छैन २५ साल्कामाहाजाचकी ले गरिदियाकोआम्दानीषेतमुरि । ८० को धां २०। का मोरू २०। र षर्च १३ । ८६ सेसकसर ६ । १४ कायेंगरेको देषियकोर पूजाहारी षङ्गवहादुरले तिलकरामसमेत सनदबमोजिं कायेंगरीलगतदियेको हुनाले सोहीबमोजिं आम्दानी कायेंगर्नेर षर्चतर्फ साविक ९ । ४७ साल्कोलगतभयेको षङ्गबहादुरले ९५ साल्मा दियेकोर सनदमालेषीयाको पर्वनमीलेकाले फेरि र घटीहुँदा सनदैबमोजिंकां चलाई आयाकोर चैत्रदशैवडादसैलाईरागाबोका २ घैघरानाबाट राषीषर्चगरी आयाको भने निजैपुजाहारिहरूले लेषिदियेकोर सोसनदमा कचावाटराषी षर्चगरीआयाको भने नीजैपुजाहारिहरूले लेषीदियेकोर सोसनदमा कचावारीफांट नषुलेतापनि आयेस्ताअनुसारभनासिवमाफिक तपसिलबमोजिं षर्चकायें गर्ने भंने समेत रिपोटको जिकिरभयाकोलाई नदीमोरू २३ । ९६ आउनेमा २४ । ५ लेषेको देषिना ले निकासाकाहकमा रिपोटकातपसिल्मालेषीयावमोजिं आम्दानीषेत । ८० कासीमुरिको घां २० । मुरीमाषर्च धां ४ । ५ । ८ चारपाथीपाचमाना आठमुरीकटाई बांकि १९ ।१५ ।२।२। को दर ।१२ लेमोरू ३२ । ९३ । ३ बतीसरूपैञात्रियान्नब्बे पैसा तींदाम्माषर्चनगदी मोरू २३ । ९६ तेइसरूपैया टयान्नब्बेपैसा कटाई बांकिकसर ९ । ९७ । ३ कायेंगरी लगत किताबषडा गर्नेराउटीकाहकमा छुट पाउने सनद लालमोहरकेहीनदेषीयेकालेर ९६ साल् दिं वेतीतहुन लागीसकेकाले ९७ साल देषीसोकसरमा नघटाई ठेक्का अडान जो गर्नुपर्ने गरी ठेक्कालागेमा ठेककसरलगत कसी तहसिलगरीदरवन्दीवमोजिं धांगरी कां चलायेनचलायेको तेस्मालबाट वरा वर जाचगर्नेर अमानतैबाटचलायेमा गोश्वारामा छीसपीदरवन्दी बमोजिंकां चलाउनु भनी साविकसनदवमोजिंमको कसर ६ ।१४ जो चाहिने वेहोरा जनाइऐंसवलको रित पुऱ्याई लगतकाटीदिनु भंनेस्मेत माल्कानाउमासनद्रगरिपठाई माललेअमानतबाट कां चलाये माते सत्रकासाछीवसी कांचलाउनलाउनभनी गोश्वारालाइलगत षडा भयेको जनाउ गुठीवन्दोवस्तकुमारीचोक समेतलाई अडैको जनाउलगत पठाउनु भंने स्मेत गुठीलगतउपर गुठीवारेको भु.स. दफावमोजिं योतोकसदरगरिबक्सनुपर्ने ठहराई जाहेर गरेकाछौं जोमर्जि हुकुंभनी नेपालपाहाड योतोक सदरगरिबक्सनुपर्ने ठहराई जाहेर गरेकाछौं जोमर्जि हुकुंभनी नेपालयापाहाड रिपोट निक्सारी लेतोकवोली जाहेर गरेकोमा

९६ ।१० ।१२ ।५ मा २ छापेवाटसदर भै आयेकोहुनाले सोबमोजिं ९७ साके देपी सो अनुसारमानघटाई ठेकाअमानत जो गर्नुपर्ने ठेक्कालगतमालका सालवसाल असुलक्षहासिलगरी तपसिलदरवन्दी वमोजिंषर्चगरीकांचलायनचलायको वरावर जाच गर्ने यसअडैवाटकांचलायेमा अदानीषर्चगरीकां चलायनचलायको वरावर चाज गर्ने यसअडैवाटकां चलायेमा आंदानीषर्च गरीकां चलायनचलायको वरावर जाच गर्ने यस अडैवाटकां चलायेमा आंदानीषर्च वाकीकरस्मेत लागत कसी रू. ६ ।१४ जो चाहिने वेहोरा जनाईऔं सवालदोरीन पुऱ्याई लगतकाटिदिनु भने स्मेतको उर्याजामरुकानाउमा सनदगरिवस्नु पर्ने ठहराई श्री ५ सर्कारतर्फै गुठी लगतजाच अडाकाहाकिंकारिंदाले हाम्राहजुरमाविंतिपार्दा जोहरभयो तसर्थ सो ठहरियामाहामी वाटपनि सदरगरिबक्सेको छ सो बमोजिं गर्ने कांगर ----तपसिल----- सम्वत् १९९६ साल चैच--- गतेरोज्

## परिशिष्ठ नं. १४

श्री ५ रणवहादुर शाहको प्रशस्ति -------------- स्वस्तिश्री गिरिराजचूडामणि नरनारायणेत्यादिविविधविरूदावलि विराजमानमानोन्नत श्रीमत्महाराजा श्रीश्रीश्री हरिकृष्ण षानके आजसम्म इन्द्रभुपाल षानकन भीर्कोटको रजाइ थामिवक्स्याका थीयो. आफ्ना पुर्षाले गऱ्याको धर्म नराषी आकालन् पता र उनको हाम्रा हुकममा चनलदा इन्द्रभुपालषानकन षोसि तिमिलाई भिर्कोटको रजाई थामिवक्स्यौं, तिमिले तिम्रासन्तानले गोरषाको ढुंगाको सोभ्रो गरन्ज्याल हाम्रा हुकुममा चलन्ज्याल तिमिलाई तिम्रासन्तान्लाई हामीले हाम्रासन्तानले नषोसनु गरि ताम्वापत्र वक्स्यौं. आफ्ना षातिज्मासंग गादिमावसि गोर्षाको ढुंगाको सोभ्रो गरि रजाईको भोग्यगर. इतिसम्वत् १८४९ सालपौषवदि ९ रोज ६ मुकाम कान्तिपुर राजधानीश्म ।

## परिशिष्ठ १५

भीरकोट सतहूँ

१८४३ साल

स्वस्तिश्रीमन्महाराजाधिराजकस्यरूक्का --------------- आगेकाजि जिवसाह नगजितपांडे पारथ भँडारी अम्वरसिंहरानाप्रवलराना प्रति भिर्कोटलाई जाहजरि सर्तौलाई दार्मुवक्स्यौ. जाहारि र दार्मुकाषेत मध्ये षेतवरोवरपारि आजकालकोसाधजो हो. सो छुटयाइदेउ. आहाको नाउनविर्सि लेष्याको छँदै षेतवरोवरपारि वाडिदेउ. इतिसंवत् १८४३ साल पौषवदि ७ रोज ३ शुभम् काठमाडौं शुभम् ------------ पछिल्तिर: रूजु जगजित्यपाडे मार्फत शिवनारायण षतृ मार्फत गोलैञा

दिनेशराज पन्त, "आश्रित राज्य उपर बहादुर शाहले लिएको नीति", **पूर्णिमा**, पूर्णाङ्क ६ (श्रावण २०२२) पृष्ठ ५३ ।

## परिशिष्ठ नं. १६

भीरेकोटे राजपरिवारलाई पेटियाभत्ता पत्र - २००० वि.सं. श्री ३ जुद्ध र कम्याण्डर इन्चिफ पद्मशम्शेरको प्रशस्ति -- ----- प. ४ नं. इलाका साँखरवस्ने अम्बरप्रकाश शाह, रत्नकुमारी माहिलाछोरा सुनन्दप्रकाश शाहका छोरानाति नवराजप्रकाश शाह कान्छा छोरा रामचन्द्र प्रकाश शाहसमेत के यथोचित उप्रान्त चौ. ववरजंशाहका नाति हर्कप्रकाश शाहका छोरा तेजप्रकाश शाहलाई पश्चिम ४ नं. भीर्कोट मौजे साँखरसमेतको रू. २७२/५९ को पेटिया दरियाको निज तेजप्रकाश २००।१।२३ मा परलोक भएको हुनाले निजलाई दियाको वर्ष १ को मोहरू २७२।५९ को पेटियाजग्गा २००१ सालकावालिदेखी तिम्रबुबातेजप्रकाश शाहले खाइपाई आयावमोजिमको जगाकोरकमकलम तिमी अमरप्रकाश शाह १ तिम्रा कान्छा भाई रामचन्द्र प्रकाश शाह १ तिम्रा मुमा रत्नकुमारी १ तिम्रा भतिजा नवराजप्रकाश शाह १ समेतले ज्यूताभरसम्म वरावर भागवंडा लगाई खानपाउने गरी वर्ष १ मा श्रावण भाद्र आश्विन ३ महिनाभित्र जिल्लागोश्वारामा कम्पूतिर्जा अड्डामा १ दिन हाजिर भई ज्यूताभरसम्म खानु भन्ने यो सनद सदरगरी खानुपर्ने ठहराज्यू जो मर्जि हुकु भनी कम्पुतिर्जाखानाका हाकिमकारिन्दाहरूले मुलुकी अड्डामार्फत हाम्रा हजुरमा विंतिपार्दा जाहेर भयो । तसर्थ सो ठहरायेकोमा हामीबाट पनि सदर गरिबक्स्याको छ सो वमोजिं गर्ने काम गर इतिसम्वत् २००० साल पौष ... गते रोज शुभम्.....

*स्रोत: स्याङजा जिल्ला साँख र निवासी रामचन्द्रप्रकाश शाहको*

*संकलनबाट दिलबहादुर क्षत्री, डक्यूमेंटस् अन् नेपाल (पोखरा: पार्वती खत्री, १९९८ ई.) पृष्ठ २७३-७४ ।*

**परिशिष्ठ नं. १७**

श्री कुलदेवता १ गंडकि २

स्वस्तिश्रीश्रीश्री महाराजेरणवहादुर संसेरजंदेवानांसदासमर बिजयिनां स्वस्तिश्रीयुवराज श्रीमद्‌बहादुर साहदेवानां सदासमर ॥ विजयिनाम् श्री देवानश्रीमज्जीवसाह वर्म्मण: सुकृतं श्रीशाके १७०८ जेष्ठकृष्णश्रीसप्तम्यां तिथौ शनिवासरे धनेष्टा ॥ नक्षेत्रेमध्यान्हेसिंहलग्ने अस्मद्रणे जय यश: कामना निमित्यर्थे– श्री तये नगरा कर्णालसहित श्री व कृतार्वनोहं शुभम् ॥ गुरूंदिका अंवलमाहा मिर्मिहाँषेत मुरि । १०० श्री १ लाई चल्हाजौं नगार्चिलाई । ३० कर्नाल्चिलाई । २० दिञ्यूं ॥ योसांध पूर्वआंधिको दषिनउपल्लो कुलोपश्चिम अलिउत्तरश्री -२ साधदिजौं ताहा मायाकोही राषत पंचपातक शुभंम् ॥

*स्रोत: आलमदेवी लसर्घामा श्री ५ रणबहादुरले वि.सं. १८४३ मा चढाएको नगराको अभिलेखबाट उध्रित ।*

# मासिंदैछन् पाटी, पौवा तथा सत्तलहरू

– प्रकाश दर्नाल

नेपालमा पाटी, पौवा, सत्तल तथा ढुङ्गे धारा बनाई कीर्ति राख्ने चलन प्राचीनकालदेखि नै थियो । लिच्छविकालीन अभिलेखमा कीर्तिको रूपमा पाटी, पौवा, धर्मशाला तथा धारा बनाउने चलन थियो भनी धनवज्र वज्राचार्यले हाडीगाउँ र मङ्गलबजारस्थित भारविको उल्लेख गरेका छन् , जुन अद्यापि छँदैछ । तर लिच्छविकालका पाटी, पौवा, तथा धर्मशालाको सम्वन्धमा प्रमाणहरु त्यति स्पष्ट छैनन् ।

नेपालको हरेक धार्मिक क्षेत्र, ऐतिहासिक स्थान, प्रसिद्ध व्यापारिक बाटोघाटो तथा बसोबास क्षेत्रहरुमा पाटी, पौवा, तथा धर्मशालाहरुको निर्माण गरिएको पाइन्छ । यस्ता पाटी तथा धर्मशालाहरूमा, मन्दिरमा पूजाआजा गर्न आउने टाढाका मान्छेहरुले सुस्ताउने, थकाई मार्ने, प्रसाद तथा भोज खाने, भजन कीर्तन गर्ने, विश्राम गर्ने आदि उद्देश्यले प्रयोग गरिने हुँदा ज्यादै महत्त्वपूर्ण छन् । मन्दिर तथा बसोबास क्षेत्रको वातावरणमा कलात्मक तथा परम्परागत निर्माण सामग्रीहरुबाट बनेका पाटी, पौवा, सत्तलहरुले जीवन्तता प्रदान गर्छन् । हाम्रो भौतिक सम्पदाहरुमा मन्दिर, देवल, दरवार, किल्ला, गुम्बा आदिका साथै पाटी, पौवा तथा सत्तलहरु पनि पर्छन् भने अभौतिक सम्पदामा जात्रा, चाडपर्व आदि पर्छन् । धर्मशाला, सत्तल आदि स्थापना गर्ने कार्यमा राजा, भारदारदेखि साधारण जनतासम्म लागेको तथ्य शिलालेख, ताम्रपत्र आदिबाट थाहा हुन्छ । आफ्नो कीर्ति दिगो रहोस् भनि दाताहरुले मर्मत सम्भार तथा पूजाआदिको लागि प्रशस्त जग्गाजमिन गुठी राखेर गएको प्रमाण भेटिन्छ ।

धार्मिक तथा सामाजिक कार्य गरेमा पुण्य पाइने भएकोले नै यस्तो प्रचलन अझै पनि चलिरहेको छ । यहाँ कीर्ति राख्नेको भन्दा कीर्ति जोगाउनेको ज्यादा प्रशंसा गरिन्छ । त्यसै कारणले गर्दा काठमाडौं उपत्यका लगायत साङ्गा, बनेपा, नाला, पनौती, धुलिखेल, दाप्चा, नाममुढा, बाल्हबिसे, दोलखा, बारा, धनकुटा, भोजपुर, सुनसरी, नुवाकोट, गोरखा, चित्लाङ्ग, पाल्पा, रिडी, पर्वत, स्वर्गद्वारी, दैलेख, अछाम, जुम्ला आदि स्थानहरुमा अझै पनि पाटी, पौवा तथा सत्तलहरु देख्न सकिन्छ । पाटी पौवा तथा सत्तलहरु नेपाली जनजीवनको एक अभिन्न अङ्ग भइसकेको दृष्टान्त थुप्रै पाइन्छ । धार्मिक कार्यमा होस् वा सांस्कृतिक चाडपर्व, ऐतिहासिक कार्यमा होस् वा सामाजिक कार्यमा पाटी पौवा तथा सत्तलहरुसंग नेपाली जनजीवनको सम्बन्ध नङ र मासुझैं एक अर्कासंग जोडिएको छ । दिनभरी काम गरेर बेलुकीपख पाटी वा फल्चामा वरिपरिका सबै भेला भई दु:खसुखका कुरा गर्ने, दिउँसो बुढाबुढीहरु नाती नातीनासंग घाम तापेर

कुराकानी गर्ने, बिहान बेलुका भजन कीर्तन गरेर आध्यात्मिक ध्यान गर्ने, वर्ष वर्षमा देवाली आदि गुठी पूजाहरु गरेर भोज भतेर खाने, विश्राम गर्ने, छलफल गर्ने, विहा व्रतबन्ध आदि जस्ता संस्कार कार्यहरुको साथै किरिया बस्ने, मलामी बस्ने आदि कार्यहरु पनि पाटी पौवामा हुन्छ । यसै कारणले गर्दा नै मल्लकालदेखि हालसम्म पनि पाटी पौवाहरुको महत्व उत्तिकै छ, घटेको छैन ।

पाटी पौवा तथा सत्तललाई यहाँ चपा, चपाल, क्वांछे, फले, फल्चा, सतः, धर्मशाला, आदि अनेकौं नामले जानिन्छ । पाटी भन्नाले ईंटा, माटो, ढुङ्गा तथा काठले बनेको एक तले, झिंगटीको छाना भन्ने थाहा हुन्छ । सत्तल चाहिँ दुई वा दुई भन्दा बढी तल्ला भएकोलाई भन्दछन् । पाटी वा सत्तलमा प्रयोग हुने काठका कलात्मक थामहरु, बुट्टे झ्याल तथा दचि अप्पाले पनि निकै कलाकारिता र आकर्षण झल्काउँछ । नेपालमा विभिन्न किसिमका वास्तुकलायुक्त पाटी , पौवा तथा सत्तल निकै नै पाइन्छ । पाटन दरवारस्थित भगिरथ भैयाले बनाएको ने. सं. ७९५ को लामपाटी, पनौतीस्थित ने. सं. ५४८ को लामपाटी, पचलीस्थित वम्वीर विकटेश्वर महादेव मन्दिरको चौघेरा सत्तल, रानीपोखरीको दक्षिणतर्फको गोलो पाटी (जसलाई हात्ती पाटी भनिन्थ्यो, हाल छैन ), काभ्रे कानपुरको खर्दार पाटी, ककनीस्थित रानीपौवा, गोकर्णस्थित सत्तल, १६ ओटा थामले बनेको पकनाजोलस्थित १६ खुट्टे पाटी, चावहिल चन्द्रविनायकस्थित वैद्य सत्तल, थापाथलीस्थित वैरागी, उदासी र सन्यासी अखाडा, पाटनस्थित आयुगुठी सत्तल, नघलको थायमदु सत्तल, पाटनस्थित सुन्धारा सत्तल, चांगुको अमात्य सत्तल, भक्तपुर दरवार क्षेत्रको तव सत्तल, अछामप्रभास्थित हाडासैन पाटी, मुक्तिनाथस्थित रानीपौवा, नाममुद्धाको श्यामपाटी, जावलाखेलको कुमारीपाटी, पुल्चोकको ढमा राख्ने पाटी, भैंसेपाटीको बालकुमारी पाटी, हाउडीको व्याली पाटी, शिरस्थानको सत्तल तथा काष्ठमण्डपको सिंह सत्तल आदिलाई उदाहरणको रुपमा उल्लेख गर्न सकिन्छ ।

राणाकालका पाटीहरुमा सुर्खिको प्रयोग धेरै पाइन्छ । हाल सिमेण्ट र छडको प्रयोग अत्यधिक बढेको छ । तर परम्परागत निर्माण सामग्रीबाट बनेका पाटी, पौवा तथा सत्तलहरुमा पनि जथाभावी सिमेण्ट र छडको प्रयोग भई रह्यो भने नेपालको मौलिक वास्तुकलामा आँच पुग्ने छ । अभिलेखको आधारमा पाटी, पौवा तथा सत्तलको इतिहास खोतल्ने हो भने बान्हौं शताब्दीको काष्ठमण्डप अर्थात मरु सत्तल नै सबभन्दा पहिलो ठहरिन्छ । त्यस पछिका कैयन महत्त्वपूर्ण सत्तलहरु विलुप्त भइसकेका छन् । हाल बचेका सत्तल पाटीहरु पन्ध्रौं सोन्हौं शताब्दीपछिका ज्यादा भेटिन्छन् । पाटीहरुको लगत राख्ने कार्य उपत्यकाका नगरपालिकाहरुले नगर क्षेत्रभित्रको मात्र गरेको भए पनि देश भरिकै समष्टीगत रुपमा भने भइसकेको पाइन्न । नेपालको १८९० र १९९० सालको भुकम्पमा पनि धेरै पाटीहरु नष्ट भएका देखिन्छन् । यसरी ऐतिहासिक, धार्मिक तथा सांस्कृतिक सम्पदाहरु मध्येको एक महत्त्वपूर्ण सम्पदामा गनिने पाटी पौवा तथा सत्तलहरु दिनानुदिन मासिदैगएको पाइन्छ । यसरी मासिनुका मुख्य कारणहरुमा -

**पहिलो कारण, आफ्नो पूर्खाले सिर्जेका कीर्तिको महत्त्व र गरिमा थाहा नहुँदा, दोस्रो कारण, योजनावद्ध दिगो विकास कार्यहरु नगर्नाले र तेस्रो कारण आधुनिक निर्माण सामग्रीप्रति मिथ्या झुकाव बढ्न गएकोले हो ।**

यहाँ कसरी हाम्रा पाटी, पौवा तथा सत्तलहरु विरुप र विकृत हुँदै मासिदै गइरहेछन् भन्ने केही तथ्यहरु प्रस्तुत गर्न खोजिएको छ ।

खुसिबुं विष्णुमती पाटी - का.म.पा. वडा नं. १७ स्थित विष्णुमती खोलाको बायाँ किनाराको घाटमा सुर्खि, ईंट्टाले बनेको तथा सुर्खि ढलान छाना भएको पाटी थियो । पूर्वी मोहडा भएको यो पाटीमा तीन कवल थियो । काठमाडौं नगर क्षेत्रको इन्भेण्टरी २०३९ को पृष्ठ २३८ मा यसको लम्बाइ १४' ९", चौडाइ ९' ३" भनिएको छ । यो पाटी ने. सं. १०८० मा मैजुलक्ष्मी तुलाधरले बनाएको उल्लेख छ । सानै उमेरदेखि नै देख्दै, खेल्दै आइरहेको उक्त पाटी एक्कासी २०५९ भदौ १५ गते विष्णुमती शोभा भगवती मन्दिर जाँदा पाटीको नामोनिशान नदेख्दा आश्चर्यचकित पर्नु पर्ने अवस्था आयो । पाटी निर्माण गर्दा दाताले पछि बाटो बन्ला र पाटी भत्कछ भन्ने शायद कल्पना पनि गरेका थिएनन् । बाटो बनाउनु नै थियो भने

पाटीलाई जोगाएर पनि त बनाउन सकिन्थ्यो ? हैन, पाटी बाटोको लागि अवरोध नै थियो भने के त्यसलाई कुनै उपयुक्त स्थानमा सार्ने योजना गर्न सकिदैनथ्यो ? के विकासको नाममा पुर्खाको कीर्ति नास गर्दै जानु राम्रो योजना हो र ?

छत्रपाटीस्थित भैरबनाथ मन्दिर अगाडिको भैरबनाथ पाटीको अहिले सिमेण्ट र छड प्रयोग गरी धमाधम निर्माण भइरहेको छ । यो त संरक्षणको नाममा ऐतिहासिक प्रमाणहरु नष्ट गर्ने कार्य गरेको ठहरिदैन र ? छत्रपाटीकै स्वाँछ्पु गणेश मन्दिर पूर्वपट्टि झिंगटी छाना भएको र काठको बुट्टाहरु कुँदिएको थामहरु भएको भजन गर्ने पाटी थियो । ने. सं. १०२१ मा निर्माण भएको यो पाटीमा हाल ढलान गरिएका खम्बाहरु भएको देखिन्छ ।

त्यस्तै ठँहिटीको नृत्यनाथ (नासद्यो) मन्दिरको पश्चिमतर्फ जोडिएर रहेको वि. सं. १९७२ को झिंगटीको पाटी पनि जीर्ण भइसकेको छ । यसै पाटीको पश्चिमतर्फ पाँच कवलको दक्षिणी मोहडाको झिंगटी छाना भएको वि. सं. १९७२ को पाटीको स्वरुप हाल बदलिएर आधुनिक भइसकेको छ । तर पाटीभित्रका बुद्ध, सरस्वती तथा लोकेश्वरका प्रस्तर मूर्तिहरु भने यथावत छन् ।

ठमेलस्थित प्रसिद्ध भगवानवहाल जाने प्रवेशद्वार अगाडि सडकको पूर्व उत्तरतर्फ दुई नाले पश्चिम मोहडाको पाँच कवल भएको तथा झिंगटी छाना भएको सत्तल थियो । यो सत्तल २२' ५" लामो र १५' ५" चौडा थियो । १८ औं शताब्दीको यो सत्तलको हाल भग्नावशेष मात्र बचेको छ । तर यसको दक्षिणतर्फको तीनवटा चैत्यहरू चाँही अद्यापि छँदैछन् । यो सत्तलको पुननिर्माण कार्य हालसम्म हुन नसकेको कारण चाँही थाहा हुन सकेको छैन ।

बागमती पुलपारी ललितपुर उपनगरपालिका वडा नं. १ (ज) कुपण्डोलको १६ र १७ मा एल आकारको सत्तललाई धेरैले बिर्सेका छैनन् होला । यो सत्तल १२.३० मिटर लामो, ९.८६ मिटर चौडा र ८ मिटर अग्लो थियो । यसको ऐतिहासिकता केलाउँदा सुन्दरानन्दको त्रिरत्न सौन्दर्य गाथाको पृष्ठ २९८मा 'भीमसेन थापाको सल्लाहमा ललितत्रिपुरा सुन्दरी देवीले शाके १७३२ संवत १८६७ मा १३५३ हातको पुल, सुवर्ण सिंहध्वज भयाको कीर्ति स्तम्भ शोभायमान भयाका वारिपारि धर्मशाला ग्रामहरु भयाको शिलान्यास गरी संवत १८६८ मा महारानीले कीर्तिस्तम्भ सहित पुलको उत्सर्ग गरिएको विवरण पाइन्छ । १९६२ सालमा चन्द्र शमशेरले काठको पुल झिकी फलामको पुल राखेको लौह अभिलेखबाट थाहा हुन्छ । उक्त पुलको ठाउँमा नयाँ पुल बनाउन वारिपट्टि सुवर्ण सिंहध्वज र लौह अभिलेख तथा पारिपट्टि एल आकारको सत्तल र घाटको सत्तल बाधक देखिएकोले वारिपट्टिको सुवर्ण सिंहध्वज र लौह अभिलेखलाई पुरानो ठाउँबाट हालको स्थानमा सार्ने कार्य मात्र गरियो । तर पारिपट्टिको घाटको सत्तल हटाइयो भने एल आकारको सत्तल चाँही मिति २०५१/१०/२९ को निर्णय अनुसार मौलिक स्थलबाट हटाई अन्य उपयुक्त ठाउँ ठहर गरी पुन मौलिक स्वरुपलाई कायम गरी पुन निर्माण गर्ने भनी नाप नक्शा र लगत इस्टिमेट तयार गरी भत्काइयो । भत्काइएका कलात्मक झ्याल, थाम, टुँडाल, दचिअप्पा, झिंगटी आदि सबै काम लाग्ने वस्तुहरु पुल निर्माण योजनाप्रमुखले स्युचाटारमा राखेको जानकारीमा आयो । त्यसपछि उक्त वस्तुहरु सडक विभाग, डिभिजन सडक कार्यालय नं. २ मिन भवनमा भएको व्योहोरा मिति २०५३/२/१४ को पत्रबाट थाहा भयो । ललितपुर उपनगरपालिकाको मेयर र ललितपुर वडा नं. १० को अध्यक्षको सहयोगमा पुल निर्माण योजनाका प्रमुखले सत्तल निर्माण गर्न उपयुक्त स्थलको अध्ययन गरी शीघ्र सुझाव दिने भनिए तापनि हालसम्म उक्त स्थलको ठहर नभएको हुँदा वास्तुकलाले युक्त महत्वपूर्ण ऐतिहासिक सत्तल अस्तित्वविहिन हुन गएको छ भने अर्कोतिर कामलाग्ने वस्तुहरु हाल के अवस्थामा रहेको होला भन्ने अनुमान लगाउन सकिन्छ ।

बोडे, नगदेश र ठिमिस्थित मूर्ति, ढुङ्गेधारा तथा पाटी पौवा आदिको लगत राख्ने सिलसिलामा २०५०/१०/२१ मा लोकन्थली गा.वि.स. वडा नं. ८/९ स्थित पाटीको पनि फोटो लिएको थिएँ । यो पाटी पाँच कवलको, उत्तरी मोहडा भएको र दुई पाखे झिंगटी छाना भएको आकर्षक थियो । पाटीमा वि. सं. १९८० को शिलालेख पनि थियो । मनहरी खोला तरेर सानो ठिमी ज़ाँदा बाटोको दाहिनेतिर यो पाटी पर्दछ । पाटीको

पछाडि अर्थात दक्षिणमा आधुनिक भुईं तल्ला भएको घर र पश्चिममा ढुङ्गेधारा भएकोमा हाल ढुङ्गेधारा पुरिएको छ भने घर चाँही भव्य दुई तले भइसकेको छ । तर पाटी चाँही भग्नावशेष भएर संरक्षणको पर्खाइमा रहेको देखिन्छ ।

मानव अतिक्रमण तथा हेलचेक्र्याईको चपेटामा परेको अर्को पाटी चाँही वडा नं. २९ , गल्कोपाखा स्थित गाहिटी ढुङ्गेधाराको उत्तरपट्टि रहेको छ । पश्चिम मोहडाको तीन कवल भएको झिंगटीको दुई पाखा भएको यो पाटी १५' लामो र १३' ८' चौडा थियो । अहिले उक्त पाटी भत्काई सिमेण्ट र छड प्रयोग गरी आधुनिक घर बनाईंदै गरिएको छ । यसरी नै पाटी पौवा र सत्तलहरु विरुप पारेर आधुनिक बनाउँदै जाने हो भने ऐतिहासिक धरोहर र पूर्खाका कीर्ति देख्न पाइने छैन । तसर्थ संरक्षित स्मारक क्षेत्रमा तथा स्मारक क्षेत्र रहेका पाटी, पौवा तथा सत्तलहरुको पुरातत्त्व विभागले हेरविचार गरे जस्तै नगरपालिका क्षेत्रहरूमा पर्ने पाटी, पौवाहरुको रेखदेख तथा संरक्षणको जिम्मा सम्बन्धित वडा तथा नगरपालिकाहरुले गर्नु पर्छ । त्यस्तै कार्य गाउँ विकास समिति कार्यालयहरुले पनि आफ्नो गाउँहरुमा गरेमा मात्र हाम्रो सांस्कृतिक सम्पदाहरुको भविष्यका सन्ततिहरूका लागि जगेर्ना गर्न सकिने छ । साथै नगरपालिकाहरुले नक्शा पास गर्दा पाटीहरू बिगार्दै नयाँ भवन निर्माण गर्न स्वीकृति दिने गरेको धेरै उदाहरणहरु पाइएकोले यसमा नगरपालिकाहरुले विशेष ध्यान दिनु पर्ने देखिन्छ ।

छत्रपाटी, भैरव मन्दिर अगाडिको पुरानो पाटी भत्काएर नयाँ ढलान पाटी वनाउँदै गरेको

खुसिंबु, विष्णुमती पाटी

खुसिंबु, विष्णुमती पाटी हटाएको अवस्था

ठमेल भगवान बहाल जाने प्रवेशद्वार अगाडिको पहिलेको सत्तल

ठमेल, भगवानवहाल जाने प्रवेशद्वार अगाडिको हालको अवस्थाको सत्तलको भग्नावशेष

मरूसत्तल, काठमाडौं

वागमती पुल पारीको भत्काइएको सत्तल

बागमती पुलपारी पाटी भत्काए पछिको दृश्य

रानीपोखरी दक्षिणतर्फस्थित गोलो पाटी, हाल छैन

मनहरा तरेर सानो ठिमी जाँदा तर्फको पाटी

मनहरा तरेर सानो ठिमी जाँदा दायाँतर्फको पाटीको भग्नावशेष

नघलस्थित सत्तल, काठमाडौं

गोकर्णेश्वर महादेव जाने बाटोको दाहिनेपट्टीको सत्तल

गोकर्णेश्वर महादेव जाने बाटोको दाहिनेपट्टिको सत्तलको हालको अवस्था

दैलेख, शिरस्थानस्थित सत्तल

गोल्खुपाखा ढुङ्गेधाराको उत्तरतर्फको पाटी

गोल्खुपाखाको पाटी भत्काएर निर्माण गरिरहेको ढलान घर

टुँडाल देवी मन्दिरको पश्चिम तर्फको पाटी